## (छ) प्रस्तुत वैदिक-तिथिपत्रको परिचय

यो तिथिपत्र मात्र मूल वैदिक कालगणनापद्धतिअनुसारको हुनाले वैदिक हो, ऐले प्रचलनमा रहेका नेपाल-भारतका अरु तिथिपत्र (पञ्चाङ्ग) सबै नै वैदिक कालगणनापद्धति-अनुसारका नभएकाले वैदिक हैनन्।

एस वैदिक-तिथिपत्रका मुख्यभागका पृष्ठहरुमा शिरका **पैला पङ्क्तिमा** एस पत्रको नाम, **कलिसंवत्**, द्वादशयुगात्मक युगसङ्घभित्रको वर्तमान **युग**को नाम, कोष्ठभित्र कलियुगमा चलिरहेको युगसङ्घको सङ्ख्या र तेसभित्रको चलिरहेको पञ्चवर्षात्मक युगको सङ्ख्या, तेस युगको **वर्तमान वैदिक वर्ष**को नाम, कोष्ठमा तेसको सङ्ख्या, कोष्ठभित्र चान्द्र ६० वर्षमध्येको **वर्तमान चान्द्रसंवत्सर**को नाम र सङ्ख्या, वर्तमान **अयन** (उदगयन वा दक्षिणायन), **ऋतु**, **मास** र **पक्ष** क्रमशः उल्लिखित गरिएका छन्। प्रस्तुत पक्ष लाग्नुभन्दा अगि बितेको **गतकलिसावनाऽहर्गण** पनि टिप्पणीमा दिइएको छ।

तिथिपत्रका मुख्यभागका पृष्ठहरुमा शिरका **दोस्रा पङ्क्तिमा** विक्रमसंवत्, शकान्तसंवत् (शकसंवत्), बार्हस्पत्य संवत्सरको नाम-कोष्ठमा बार्हस्पत्य षष्टिसंवत्सरमध्ये वर्तमान बार्हस्पत्य-संवत्सरको सङ्ख्या, सम्बद्ध पक्षमा परेको वर्तमान कालमा अवैदिक कालगणना अँगाल्ने अरु-हरुले मान्ने गरेका गते गनिने सौर-मासको संस्कृतनाम, कोष्ठभित्र तेस मासका नेपालिका वर्तमान लोकव्यवहारमा प्रचलित नेपालि नाम, तेस पृष्ठमा उल्लिखित पक्षमा परेको मेष-वृषादि राशिलाइ लिएर अर्वाचीन कालमा परिभाषित गरिएको पूर्णिमान्त चान्द्र मैनाका पक्षका नाम, कोष्ठमा नेपाल-संवत् र विशेषतः काठमाण्डु उपत्यकाका नेवारि परम्परामा आइरहेको कृष्णान्त चान्द्रमासका पक्ष-विशेषको नेवारि नाम र तेसको संस्कृत अनुवाद तथा आर्को कोष्ठभित्र अङ्रेजि मैनाको नाम र वर्ष (क्रैस्ताब्द) क्रमैले दिइएका छन्। इ दोस्रा पङ्क्तिका उल्लेख वैदिक तिथिपत्रका संवत् अयन, ऋतु, मास तथा पक्ष चल्तिको अवैदिक पञ्चाङ्गमा कुन संवत्, अयन, ऋतु, मास तथा पक्ष मानिएका छन् भनि सूचित गर्न र दुइथरि पात्राको तुलनात्मक ज्ञान दिन गरिएको हो। वैदिक मूल परम्पराका अनुयायिले एस उल्लेखको उपेक्षा गरिदिने हो।

तिथिपत्रका मुख्य भागका पृष्ठहरुमा पृष्ठका देउरेपट्टिका पैलो ठाडो पङ्क्तिमा वैदिक कालगणनापद्धति-अनुसारका श्रौत-स्मार्त धर्मकर्ममा अँगालिने प्रतिपदादि **तिथि**हरु दिय्येका छन्। दोस्रो ठाडो पङ्क्तिमा तेसतेस दिनका सूर्योदयदेखि सूर्यास्तसम्म रहने करणहरु दिय्येका छन्। तेसतेस दिनका सूर्यास्तदेखि आर्को सूर्योदय नभइञ्जेल रातभर रहने करण दिनको करणभन्दा पछिल्लो करण हुञ्छ भन्ने जान्न पर्छ। शुक्लपक्षका रातका करणहरूका नाम र कृष्णपक्षका रातका करणहरूका नाम करणचक्रमा दिय्येका छन्। करणको ठाडो पङ्क्तिभन्दा पछिको ठाडो पङ्क्तिमा श्रौत-स्मार्त धर्मकर्ममा नअँगालिने **अर्वाचीन सिद्धान्तज्योतिषको परिभाषा**अनुसारका **दृक्सिद्ध गणनाका** लौकिक तिथिहरु दिय्येका छन्। तेसपछिको ठाडो पङ्क्तिमा ति-ति लौकिक तिथिको समाप्ति हुने काल तेस दिनको घण्टा मिनेटमा दिय्येको छ, त्याँहाँ २४ भन्दा माथिका अङ्क भए तेस दिनको रातका १२ बजेपछिको १ घण्टाको समयलाइ २५ घण्टा दुइ घण्टाको समयलाइ २६ घण्टा इत्यादि भनिएको भन्ने जान्न पर्छ। लौकिक तिथिका घण्टा-मिनेटको ठाडो पङ्क्तिभन्दा पछिल्लो ठाडो पङ्क्तिमा वैदिक-कालगणनापद्धतिअनुसारका **नक्षत्र**हरु दिय्येका छन्। तेसपछिको ठाडो पङ्क्तिमा उल्लिखित **वैदिक नक्षत्रकालको समाप्तिको मुहूर्त र कला** दिय्येको छ; मुहूर्तको २० भागको १ भागजतिलाइ कला भन्दछन् (वेदाङ्गज्योतिष, श्लो. ३८), कलाको २० भागको १ भागलाइ काष्ठा भनिने बुजिञ्छ (द्र.– वेदाङ्गज्योतिष, श्लो.३८,३९)। तेसपछिको ठाडो पङ्क्तिमा **वैदिक नक्षत्रको समाप्तिकालको घण्टा-मिनेट** दिय्येको छ। तेसपछिको ठाडो पङ्क्तिमा लौकिक नक्षत्र र तेसपछिको ठाडो पङ्क्तिमा उल्लिखित लौकिक नक्षत्रको समाप्तिकालको **दृक्सिद्ध गणनाअनुसार** घण्टा-मिनेट दिय्येको छ। **याँहाँ वैदिक नक्षत्रक्षेत्रको प्रारम्भ कृत्तिकाको चन्द्रमासित पैलेइ संयोग हुने तारासित चन्द्रमाको संयोगलाइ लिएर मानिएको छ। बेङ्कटेश बापूजी केतकरको 'नक्षत्रविज्ञान' भन्ने ग्रन्थमा दिय्येका नक्षत्रविशेषक्षेत्रहरुलाइ वर्तमान कालका लौकिक ज्योतिषिले मान्ने लौकिकनक्षत्रक्षेत्र मानि तेससित वैदिकनक्षत्रक्षेत्रमा पर्न जाने फरकलाइ लिएर वैदिक नक्षत्रकालविशेषको निर्धारण गरिएको छ।** तेसपछिको ठाडो पङ्क्तिमा विष्कम्भादि स्थिर २७ योगहरु दिय्येका छन्, तेसपछिको ठाडो पङ्क्तिमा तेसतेस योगको समाप्तिकाल घण्टामिनेटमा दिय्येको छ। विष्कम्भादि २७ स्थिर योगहरु— **विष्कम्भः,**

**प्रीतिः, आयुष्मान्, सौभाग्यः, शोभनः, अतिगण्डः, सुकर्मा, धृतिः, शूलम्, गण्डः, वृद्धिः, ध्रुवः, व्याघातः, हर्षणः, वज्रम्, सिद्धिः, व्यतीपातः, वरीयान्, परिघः, शिवः, सिद्धिः, साध्यः, शुभः, शुक्लः, ब्रह्मा, ऐन्द्रः, वैधृतिः** इ हुन्। इनका स्वामिहरुको क्रमशः उल्लेख नारदसंहिता भन्ने ग्रन्थमा (सप्तम अध्याय, श्लो. १,२) पाँइन्छ; जगन्मोहनका योगफलाध्यायमा (तिसौं अध्यायमा) पनि इनको प्रतिपादन छ। तेसपछिका मुहूर्तगणपति इत्यादि ग्रन्थमा पनि इनको उल्लेख छ। इनको धर्मकर्मका सङ्कल्पमा उल्लेख गर्ने कुरा पण्डित हरिनाथ प्याकुर्‍यालका सङ्कल्परत्नावलिमा (प्र.सं. पृ. १०, १९; द्वि. सं. पृ. ८, १६) पनि छ। विष्कम्भादि योगको घण्टा-मिनेटको ठाडो पङ्क्तिभन्दा पछिको ठाडो पङ्क्तिमा वारविशेषका र नक्षत्रविशेषका योगले हुने कार्यविशेषमा विशेष विचार गरिने आनन्दादि २८ चर योगहरु दिय्येका छन्। तिनको उल्लिखित लौकिक नक्षत्रको समाप्तिकालमा समाप्ति मान्ने गरिन्छ भन्ने जान्न पर्छ। आनन्दादि योग— **आनन्दः, कालदण्डः, धूम्रः (धूम्राक्षः), धाता (प्रजापतिः), सौम्यः, ध्वाङ्क्षः, केतुः (ध्वजः), श्रीवत्सः, वज्रम्, मुद्गरः, छत्रम्, मित्रम्, मानसम्, पद्मम्, लुम्बः, उत्पातः, मृत्युः, काणः, सिद्धिः, अर्थः, शुभः, मुसलम्, गदः, मातङ्गः, राक्षसः (रक्षः), चरः, स्थिरः, वर्धमानः** इ २८ हुन्। इनको उल्लेख नारदसंहिता भन्ने ग्रन्थमा (दशम अध्याय, श्लो. ८–१०), मुहूर्तचिन्तामणिका शुभाशुभ-प्रकरणमा (श्लो. २३,२४) र तेसपछिका अरु ज्योतिषग्रन्थमा पनि पाँइन्छ। इनको धर्मकर्मका सङ्कल्पमा उल्लेख गर्ने परम्परा छैन। **इ विष्कम्भादि २७ स्थिर योग र आनन्दादि २८ चरयोग अर्वाचीन ज्योतिष ग्रन्थका हुन्, मूल वैदिक वाङ्मयमा छैनन्। तसर्थ श्रौत-स्मार्त धर्म-कर्मको कालको निर्णय गर्दा इनको विचार आवश्यक छैन, इच्छा लाग्नेले विचार गर्न सक्छन्, इच्छा नलाग्नेले विचार नगरे पनि हुन्छ। श्रौत-स्मार्त धर्म-कर्मका सङ्कल्पमा पनि इनको उल्लेख आवश्यक छैन।** आनन्दादियोगको ठाडो पङ्क्तिभन्दा पछिको ठाडो पङ्क्तिमा तेस दिन चन्द्रमा रहने लौकिक नक्षत्रअनुसारका वेदमा नभएका मेष-वृष इत्यादि राशिहरु दिइय्येका छन्; कुनै दिनमा ति राशिविशेषको उल्लेख नगरिकन घण्टामिनेटको उल्लेख गरिएको छ भने तेस दिन तेति घण्टा-मिनेटसम्म माथिल्लो कोष्ठमा उल्लिखित राशिमा चन्द्रमा रहन्छन्, तेति घण्टा-मिनेटपछि तल्लो कोष्ठमा उल्लिखित राशिमा जान्छन् भन्ने बुज्न पर्छ। चन्द्रमाको राशिको ठाडो पङ्क्तिभन्दा पछिको ठाडो पङ्क्तिमा तेसतेस दिनका दिनमानका घण्टा-मिनेटहरु, तेसपछिका ठाडो पङ्क्तिमा तेसतेस दिनका सूर्योदयका घण्टा-मिनेटहरु र तेसपछिको ठाडो पङ्क्तिमा सूर्यास्तका घण्टा-मिनेटहरु दिय्येका छन्। सूर्यास्तका घण्टा-मिनेट दिइएको ठाडो पङ्क्तिभन्दा पछिको ठाडो पङ्क्तिमा **वैदिक आर्तव (सायन) सौर वर्षको सावनाऽहर्गण** दिय्येको छ। वैदिक सौर-चान्द्र नववर्ष लागिसक्ता पनि अगिल्लो दृक्सिद्ध आर्तव (सायन) वैदिक सौर वर्ष बितिसकेको छैन भने तेसैको अहर्गण दिएर त्यो बितिसकेपछि **नवीन दृक्सिद्ध आर्तव (सायन) वैदिक सौर वर्षको अहर्गण** दिय्येको छ। अहर्गणको ठाडो पङ्क्तिभन्दा पछिको ठाडो पङ्क्तिमा वैदिक मूल ग्रन्थमा नभएका तर आजभोलि लोकमा अत्यन्त प्रसिद्ध वारहरु दिय्येका छन्। तेसपछिका ठाडो पङ्क्तिमा वेदमा नभएका अर्वाचीन सूर्यसिद्धान्तअनुसारका राशिमूलक परिभाषाका गत १९६० संवत्देखि राणाशासक चन्द्रसम्सेरका आदेशले शासकीय व्यवहारमा अनिवार्य गरिएका **मेषमास-वृषमास इत्यादि (वैशाख-जेठ इत्यादि)** सौरमासका गतेहरु दिय्येका छन्। तेसपछिका ठाडा पङ्क्तिमा क्रिश्चियन (इसाइ) वर्षका जनबरि-फरबरि इत्यादि मैनाका **परराष्ट्र-व्यवहारमा उपयोगि** तारिखहरु दिय्येका छन्। तेसपछिका खण्डमा तेसतेस दिनका मुख्य श्रौत स्मार्त पौराण इत्यादि व्रतपर्वहरु उल्लिखित छन्। सम्बद्ध तिथिका पङ्क्तिमा व्रतपर्वादिको सबै विवरण नअटाएमा बाँकि विवरण बुट्टा चिह्न दिएर खालि भएका आर्का पङ्क्तिमा दिय्येको छ। त्याँहाँ पनि नअटाएमा फेरि आर्को चिह्न दिएर आर्को ठाममा विवरण दिइएको छ। **वास्तवमा पौराण व्रत-पर्वहरु पनि मेष-वृषादिराशि-पद्धतिमा आधृत नवीन परिभाषाका चान्द्रमासहरुमा नमनाइ वैदिक मूल शास्त्रअनुसारका वैदिक चान्द्र तपोमासाद्यभिन्न वैदिक आर्तव चान्द्र माघमासादिमा नै मनाउनु समुचित हो तापनि वैदिक-तिथिपत्रको एस सङ्क्रमणकालमा ऐलेलाइ पौराण व्रतपर्वहरु नवीन परिभाषाका चान्द्रमासमा लेखिएका छन्। एसमा विशेष विचार र आवश्यक परिवर्तन पछि हुनेछ।** तिथिपत्रका मुख्य भागका पृष्ठहरुमा तल्लो भागमा गतकलिसावनाऽहर्गणपछि **सूर्यको नक्षत्रप्रवेशको वैदिकसिद्धान्तानुसारि काल मुहूर्तमा र कलामा दिय्येको छ।** कोष्ठकमा सो काल घण्टा-मिनेटमा पनि दिय्येको छ। अवशिष्ट स्थानमा केइ ज्ञातव्य विषयसित सम्बद्ध वचनहरु सङ्गृहीत छन्। एस तिथिपत्रका प्रयोक्ता-हरुबाट प्राप्त विचारअनुसार ग्रहस्थितिसारणी र ग्रहकुण्डली पनि इनै पृष्ठहरुमा राखिएका छन्।

**श्रौति वैदिक** भन्नाले श्रौत अग्निको आधान गरेका द्विजहरु बुजिञ्छन्। **स्मार्त वैदिक** भन्नाले गृह्य अग्निको आधान गरेका द्विज बुजिञ्छन्। **उपवसथ**=इष्टिको अगिल्लो दिन, व्रतग्रहण गर्ने दिन, **पूर्णमासेष्टि**=श्रौत अग्निको आधान गरेका द्विजले पूर्णिमाका र प्रतिपदाका सन्धिमा गर्ने इष्टि, **दर्शेष्टि**=श्रौत अग्निको आधान गरेका द्विजले अमावास्याका र प्रतिपदाका सन्धिमा गर्ने इष्टि, **वैश्वदेवपर्व**=श्रौत अग्निको आधान गरेका द्विजले गर्ने चातुर्मास्ययज्ञका चार पर्वमध्येको पैलो पर्व, **वरुणप्रघास**=चातुर्मास्ययज्ञका चार पर्वमध्येको दोस्रो पर्व, **साकमेध**=चातुर्मास्ययज्ञका चार पर्वमध्येको तेस्रो पर्व, **शुनासीरीय**=चातुर्मास्ययज्ञका चार पर्वमध्येको चौथो पर्व, **निरूढपशुबन्ध**=श्रौत अग्निको आधान गरेका चातुर्मास्य याग गरिसकेका समर्थ व्यक्तिले गर्ने स्वतन्त्र पशुयाग। इ र एस्ता वैदिक कर्मको वेदमन्त्रसंहिता-ब्राह्मणग्रन्थ-श्रौतसूत्र-गृह्यसूत्र-परिशिष्टका आधारमा दिइएको परिचय स्वाद्ध्यायशालाका **वैदिक धर्म मूल रूपमा** (प्र.सं. २०४५, द्वि.सं. २०६२) भन्ने, **वैदिक हिन्दु धर्म-संस्कृति** (२०६५)भन्ने र **कतिपयवैदिकयज्ञपरिचयः** (२०६७) भन्ने पुस्तकहरुमा पाँउन सकिञ्छ। इ ग्रन्थमा दिइएको प्रामाणिक परिचयको अध्ययनबाट श्रौत-स्मार्तयज्ञका विषयमा अरुले दिएका विवरणमा रहेका गडबडिका सम्बन्धमा पनि विवेक गर्न सकिञ्छ।

एस तिथिपत्रमा लोकमा प्रचलित व्यवहारका लागि लोकले खोजि गर्ने कतिपय आवश्यक मुख्य कुराहरु **अनुबन्ध**मा जोडिएका छन्।

## (ज) प्रस्तुत वैदिक तिथिपत्रको प्रकाशनको आवश्यकता

भारतवर्षमा धेरै अघिदेखि हुँदै आएका विदेशि-विधर्मिहरुका आक्रमणले र शासन-स्थापनले गर्दा आर्षशिक्षा झन्झन् शिथिल हुँदै गएको देखिञ्छ। नेपालमा २०११ संवत्देखि नै नेपालि शासकहरु नै परम्परागत रूपमा चल्दै आएको वेद-वेदाङ्गादि संस्कृतशिक्षा हटाइ विधर्मि विदेशि शिक्षा-संस्कृतिको अन्धाधुन्द प्रचारप्रसार गर्न अग्रसर हुँदै गएकाले, पाश्चात्त्यहरुलाइ रिजाइ भिख मागेर वा रिन काडेर ल्याएको भनि चारो छरि जनताका आँखामा छारो हालि शासनाधिकारमा अडिन बल गर्ने वा शासनाधिकारमा पुग्न वा अडिन प्रयास गर्ने नेपालि शासकहरुले दार्शनिक रूपमा सबल गम्भीर तत्त्वदर्शनमा र शाश्वत प्राकृत स्वभावमा आधृत वैदिक सनातन वर्णाश्रम-धर्मलाइ शिथिल बनाइ क्रिश्चियनमत चलाउन चाहाने पश्चिमाहरुले दिएका दुर्बुद्धिमा लागि शास्त्रधर्मसंस्कृतिका ठाममा लोकधर्मरूपको कथित नेपालि संस्कृति विकसित गर्ने प्रयास गर्नाले, संस्कृत शिक्षाको विकास विस्तार र सुदृढीकरण गर्ने कार्यक्रम नराखि देखाव्नटका निम्ति २०४३ संवत्मा स्थापित गरिएका संस्कृत-विश्वविद्यालयले पनि २०२८ संवत्मा गरिएको प्रवेशिकाको (एस्.एल्.सि.को) अनिवार्य संस्कृतभाषा हटाउने संस्कृतमाध्यमिक विद्यालयहरु मास्ने इत्यादि गरि शासकले गरेका संस्कृत शिक्षाको जरो उखेल्ने कामलाइ अगि बडाउँदै पूर्व-मध्यमा तहलाइ अन्यथासिद्ध गर्ने गरि सो तहका संस्कृत विषयहरु नपडिकनै ४ मैने प्रशिक्षणबाट उत्तरमध्यमामा प्रवेश दिने व्यवस्था गरि संस्कृत-शिक्षाको जरो उखेल्ने कामलाइ अगाडि बडाउँदै गर्नाले र संस्कृत विश्वविद्यालयले तथा गोर्खापत्र, रेडियो नेपाल, नेपाल दूरदर्शन (टेलिविजन) इत्यादि शासकीय सञ्चारमाध्यमसमेतका नानाप्रकारका सञ्चारमाध्यमहरुले धर्मका विषयमा समेत वेदशास्त्रव्यवस्थाको प्रतिकूल अप्रामाणिक ग्रन्थलाइ विचारलाइ र व्यवहारलाइ अन्दाधुन्द प्रचारमा ल्याउन थाल्नाले समेत अज्ञानमा, मतिभ्रममा, विपन्नतामा र पतनमा जकडिन पुग्दै गएका ब्राह्मणहरुमा **ब्राह्मणत्वको र वेदवेदाङ्गको आर्षशिक्षाका माहात्म्यको चेतना तथा कुन देशमा कुन कालमा कस्ता कर्ताले के फल पाउन कुन पद्धतिले स्थापित अग्निमा केके सामग्रीले कुन पदार्थक्रमले कुन शास्त्रका आधारमा कुन विधिवाक्यका आधारमा के कर्म गर्न पर्ने हो इत्यादि कुरा शास्त्रका आधारमा निश्चय गरि धर्मकर्म गर्न गराउन पर्नेमा मूल वेद-वेदाङ्गशास्त्र-प्रतिपादित धर्मकृत्यका देश, काल, कर्ता, अधिकारि, अग्नि, हवि, समिधा, अरु शास्त्रीय सामग्री, विधि-निषेध, क्रियाक्रम इत्यादिका व्यवस्थापक शास्त्र पड्न र शास्त्रका कुरा बुज्न गुरु-पुरोहितको काम गर्ने ब्राह्मणहरुले पनि विविध कारणले आजभोलि नपाउने हुँदै गएको र तिनमा तेस विषयको शास्त्रीय चेतना हराउँदै जान लागेको देखि सो जगाउन स्वाद्ध्यायशालाकुटुम्ब अनेक प्रकारले यथाशक्ति प्रयत्न गरिरहेको छ।** एसै प्रसङ्गमा श्रौत-स्मार्त-धर्मकर्मका लागि कालगणनाको सिद्धान्त बताउने **"पञ्चसंवत्सरमयम्"** इत्यादि परमप्रामाणिक मूल वेदाङ्ग-ज्योतिषग्रन्थका र अरु वेद-वेदाङ्ग-ग्रन्थका सिद्धान्तमा ध्यान आकृष्ट गर्दै पञ्चाङ्गनिर्णायक

समितिले स्वीकृत गर्ने पञ्चाङ्गहरुमा वैदिक कालगणनापद्धतिअन्सारका विषय पनि समाविष्ट गर्न अनुरोध गर्दा पनि तेसो गर्ने व्यवस्था नगरि वैदिक मूल कालगणनापद्धतिलाइ प्रकाशमा ल्याउनमा विघ्नबाधा उपस्थापित गर्ने पञ्चाङ्ग-निर्णायक-समितिको प्रवृत्ति देखिएको छ। संस्कृत-विश्वविद्यालयले पञ्चाङ्ग प्रकाशित गर्दा पनि मूल वैदिक कालणनापद्धतिमा ध्यान नदिय्येको देखिञ्छ। अनि भारततिर पनि प्रान्तैपिच्छे सौरपक्षीय, आर्यपक्षीय, ब्रह्मगुप्तपक्षीय, दृक्सिद्ध, आर्तव इत्यादि नानाप्रकारका पञ्चाङ्गहरु बन्ने र प्रकाशित हुने गर्दा र **राष्ट्रिय पञ्चाङ्ग** भनि पञ्चाङ्ग प्रकाशित गर्दा पनि वास्तविक वैदिक तिथिपत्र बनाउन र प्रकाशित-प्रचारित गर्न ध्यान गएको पाइँदैन। वेद-वेदाङ्गप्रतिपादित धर्मकर्मव्यवस्थालाइ यथाशक्ति प्रकाशनमा र प्रचारणमा ल्याउनु स्वाद्ध्यायशालाकुटुम्बले आँफ्नो प्रमुख कर्तव्य मानेको छ। वेदवेदाङ्गानुयायि सज्जनहरुबाट एस्तो तिथिपत्र (पञ्चाङ्ग) प्रकाशित गर्न स्वाद्ध्यायशालाकुटुम्बलाइ वारंवार अनुरोध गरिँदै आएको पनि हो। ठुलो श्रौतकर्म भनेर कर्म गरेको भनिँदा पनि वेदवेदाङ्गोक्त कर्मविशेषकाल नबुजि नसमाति कर्म गरिएको देखिँदै आएको छ। एस परिस्थितिमा यो **वैदिक-तिथिपत्र** प्रकाशित गर्ने काम भएको हो। एसबाट वेदवेदाङ्गानुयायि सज्जनहरुलाइ **श्रौत-स्मार्त धर्मकर्म**का लागि श्रुति-स्मृतिप्रोक्त धर्मकृत्यविशेषकाल ठम्याउन र समात्न तथा श्रौत-स्मार्त धर्मकर्मका सङ्कल्पमा श्रुति-स्मृतिसम्मत रूपमा कालको उल्लेख गर्न सहयोग पुग्ने छ भन्ने आशा राखिएको छ। एस प्रकारका काममा वेदवेदाङ्गानुयायि सज्जनहरुको अरु सहायता प्राप्त हुँदै जानेछ भन्ने पनि आशा गरिएको छ।

**केवल पाश्चात्त्य अनुसन्धाता जर्बिस, कोलब्रुक, म्याक्समुलर, याकोबि, व़ेबेर, थिबो इत्यादिले मात्र हैन; आर्यावर्तमा शककुषाणादि विदेशि-विधर्मिहरुका आक्रमणादिले मौलिक वैदिक आर्षशिक्षापद्धतिमा पर्न आएका बाधाव्यवधानले गर्दा भारतीय अनुसन्धाता कृष्णशास्त्रि गोडबोले, जनार्दन बालाजी मोडक, शङ्करबालकृष्ण दीक्षित, लाला छोटेलाल (बार्हस्पत्य), सुधाकर द्विवेदि, बालगङ्गाधर तिलक, वेङ्कटेश बापूजी केतकर, गोविन्दगणक, योगेशचन्द्र राय, शामशास्त्रि, गोरखप्रसाद, सत्यप्रकाश, इन्द्रनारायण द्विवेदि, भारत-सर्कारका पञ्चाङ्ग-सुधारसमितिका अध्यक्ष ठुला खगोलवैज्ञानिक मानिएका मेघनाद साहा, सदस्यसचिव निर्मलचन्द्र लाहिडि, अन्य सदस्यहरु इत्यादिले पनि राम्ररि बुज्न र व्याख्या गर्न नसकिराखेको वेदाङ्ग-ज्योतिषको मूल कालगणनापद्धतिलाइ वेद-वेदाङ्ग-स्मृति-पुराणेतिहासको गम्भीर अध्ययनका आधारमा वेदाङ्गज्योतिषको कौण्डिन्न्यायनव्याख्यानद्वारा स्पष्ट पारि आँफ्ना मौलिक वैदिक कालगणनापद्धतिका विषयमा २ हजार वर्ष जति अगिदेखि आर्यजनमा फैलिँदै आएका अज्ञानान्धकारलाइ चिर्दै आर्यतपोभूमि एस हिमवत्खण्डस्थ-नेपालबाट यो वैदिक तिथिपत्र प्रकाशित गर्ने काम थालिएको छ।** एसको वेदवादि शास्त्रवादि वैदिकसनातनवर्णाश्रमधर्मवादि न्यायवादि सत्यवादि ब्राह्मणहरुले विवेचन-अनुशीलन गर्नुहुनेछ र एसमा आवश्यक परिष्कार गर्दै जान सहयोग गर्नुहुनेछ भन्ने आकाङ्क्षा राखिएको छ। यो भर्खरै थालिएको एस्तो प्रयास भएकाले एसमा त्रुटि रहन गएका हुन सक्छन्। तिनको परिमार्जन आगामि वर्षहरुमा हुँदै जाने छ।

सम्बद्ध सबैका कुरा सुनेर सैद्धान्तिक रूपमा मैले आँफुले निर्णय गरि निर्धारण गरेको मार्ग अँगालेर एस पात्रालाइ एस रूपमा निष्पन्न गर्ने काम मुख्य रूपमा प्रमोदवर्धन कौण्डिन्न्यायन-बाट भएको हो। एस पात्राको एस आकारमा मुद्रण गर्न स्वरूप निष्पन्न गर्ने काम सुमोदवर्धन कौण्डिन्न्यायनबाट भएको हो। आमोदवर्धन कौण्डिन्न्यायनबाट एस काममा धेरै सहयोग भएको छ। सम्मोदवर्धन कौण्डिन्न्यायनबाट र अतिसम्मोदवर्धन कौण्डिन्न्यायनबाट पनि केइ सहयोग भएको छ। सुसङ्गमकयन्त्रद्वारा पात्रोको गणना गर्नमा रघुनाथ उपाध्याय ढुङ्गेलबाट सहयोग भएको छ। प्रचारणसंयोजक कृष्णराज व़ाग्ले, कृष्णप्रसाद दुव़ाडि आत्रेय, केशव दाहाल इत्यादि विविध क्षेत्रका व्यक्तिहरुबाट प्रचारणमा विशेष अग्रसरता लिइएको छ। एस पात्राका प्रकाशनमा र प्रचारणमा विशेष सहयोग गर्ने सज्जनहरुका नामहरु गातामा पछाडिपट्टि मुद्रित गरिएका छन्। प्रकाशनमा सहयोग गर्ने अरु सज्जनहरुका नाम पनि तिँहिँ मुद्रित छन्। उक्त सबैलाइ यथोचित आशीर्वाद, धन्यवाद र साधुवाद छ।

**—शिवराज आचार्य कौण्डिन्न्यायन**

कलिसंवत् ५०८१, ऊर्जशुक्लपञ्चमी (२०७३।५।२१)

## (फ) वेदमा प्राप्त कालगणनाविषयक महत्त्वपूर्ण कतिपय उल्लेखहरु

### (१) वेदमा अहोरात्रात्मक तिथि

**अहोरात्रेभ्यः स्वाहाऽर्धमासेभ्यः स्वाहा मासेभ्यः स्वाहऽ ऋतुभ्यः स्वाहाऽऽर्तवेभ्यः स्वाहा संवत्सराय स्वाहा।**—माध्यन्दिनीय-वाजसनेयिशुक्लयजुर्वेदमन्त्रार्षसंहिता (२२।२८),
द्र.– तैत्तिरीयकृष्णयजुर्वेदसंहिता (७।१।१५)।

**उषसस्ते कल्पन्तामहोरात्रास्ते कल्पन्तामर्धमासास्ते कल्पन्ताम् मासास्ते कल्पन्तामृतवस्ते कल्पन्तां संवत्सरस्ते कल्पताम्।**—मा.वा.शुक्लयजुर्वेदमन्त्रसंहिता (२७।४५)।

**अहोरात्राण्यर्धमासा मासाऽऋतवः संवत्सरे प्रतिष्ठिताः।**—माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-शतपथब्राह्मण (१२।८।३।१४)।

**अहोरात्राण्यर्धमासा मासा ऋतवः संवत्सरा विधृताः।**—मा.वा.शु.य.वे.श.ब्रा. (१४।६।८।९)।

### (२) वेदमा मधु-माधवादि १३ चान्द्र मास

मधवे स्वाहा माधवाय स्वाहा शुक्राय स्वाहा शुचये स्वाहा नभसे स्वाहा नभस्याय स्वाहेषाय स्वाहोर्जाय स्वाहा सहसे स्वाहा सहस्याय स्वाहा तपसे स्वाहा तपस्याय स्वाहांहसस्पतये स्वाहा।
—मा.वा.शुक्लयजुर्वेदमन्त्रसंहिता २२।३१।

### (३) वेदमा चान्द्र ऋतु

मधुश् च माधवश् च वासन्तिकावृतू।... –मा.वा.शु.य.वे. १३।२५,१४।६,१५,१६,२७,१५।५७।

अहोरात्राण्यर्धमासा मासाऽऋतवः संवत्सरे प्रतिष्ठिताः।—मा.वा.शु.य.वे.शत.ब्रा. १२।८।३।१४।

अहोरात्राण्यर्धमासा मासा ऋतवः संवत्सरा विधृताः।—मा.वा.शु.य.वे.शत.ब्रा. १४।६।८।९।

अर्धमासा मासा ऋतवः संवत्सर ओषधीः पचन्ति।—तैत्तिरीयकृष्णयजुर्वेदसंहिता ५।७।२।५।

अर्धमासानेव मासानृतून् संवत्सरं प्रीणाति।—तै.सं. ५।७।२।६।

अहोरात्रे निमेषोऽर्धमासाः पर्वाणि मासाः सन्धानान्यृतवोऽङ्गानि संवत्सर आत्मा।
—तै.सं. ७।५।२५।१।

स त्वाऽह्ने परिददात्वहस् त्वा रात्रौ परिददातु रात्रिस् त्वाऽहोरात्राभ्यां परिददात्वहोरात्रौ त्वाऽर्धमासेभ्यः परिदत्तामर्धमासास् त्वा मासेभ्यः परिददतु मासास् त्वर्तुभ्यः परिददत्वृतवस् त्वा संवत्सराय परिददतु।—ताण्डिकौथुमराणायनीयसामवेदमन्त्रब्राह्मण १।५।१५।

### (४) वेदमा सौरचान्द्र वर्ष

**द्वादश वा वै त्रयोदश वा संवत्सरस्य मासाः।**—मा.वा.शु.य.वे.शतपथब्राह्मण २।२।३।२७।

**संवत्सरो वाव विवर्तोऽष्टाचत्वारिंशस् तस्य षड्विंशतिरर्धमासास् त्रयोदश मासाः सप्तर्तवो द्वे अहोरात्रे।**—मा.वा.शु.य.वे.शतपथब्राह्मण ८।४।१।२५।

### (५) वेदमा पञ्चवर्षात्मक युग

**संवत्सरोऽसि परिवत्सरोऽसीदावत्सरोऽसीद्वत्सरोऽसि वत्सरोऽसि।**
— मा.वा.शुक्लयजुर्वेदमन्त्रसंहिता २७।४५, मा.वा.शु.य.वे.शतपथब्राह्मण ८।१।४।८।

**संवत्सराय पर्य्यायिणीम् परिवत्सरायाऽविजातामिदावत्सरायाऽतित्वरीमिद्वत्सरायाऽतिष्कद्वरीं वत्सराय विजर्जरां संवत्सराय पलिक्नीम्।**— मा.वा.शुक्लयजुर्वेदमन्त्रसंहिता ३०।१५।

### (६) वेदमा नक्षत्र र नक्षत्रदेवताका नाम

अग्निर् देवता कृत्तिका नक्षत्रं प्रजापतिर् देवता रोहिणी नक्षत्रं मरुतो देवतेन्वका नक्षत्रं रुद्रो देवता बाहुर् नक्षत्रमदितिर् देवता पुनर्वसुर् नक्षत्रं बृहस्पतिर् देवता तिष्यो नक्षत्रं सर्पा देवताऽऽश्लेषा नक्षत्रं पितरो देवता मघा नक्षत्रं भगो देवता फल्गुनीर् नक्षत्रमर्यमा देवतोत्तराः फल्गुनीर् नक्षत्रं सविता देवता हस्तौ नक्षत्रं त्वष्टा देवता चित्रा नक्षत्रं वायुर् देवता निष्ट्या नक्षत्रमिन्द्राग्नी देवता विशाखं नक्षत्रं मित्रो देवताऽनूराधा नक्षत्रमिन्द्रो देवता ज्येष्ठा नक्षत्रं निरृतिर् देवता मूलं नक्षत्रमापो देवताऽषाढा नक्षत्रं विश्वेदेवा देवतोत्तरा अषाढा नक्षत्रं विष्णुर् देवताऽश्वत्थो नक्षत्रं वसवो देवता श्रविष्ठा नक्षत्रं वरुणो देवता शतभिषङ् नक्षत्रमज एकपाद् देवता प्रोष्ठपदा नक्षत्रमहिर्बुध्न्यो देवतोत्तरे प्रोष्ठपदा नक्षत्रं पूषा देवता रेवती नक्षत्रमश्विनौ देवताऽश्वयुजौ नक्षत्रं यमो देवताऽप-भरणीर् नक्षत्रमग्ने रुचस् स्थ प्रजापतेस् सोमस्य धातुर् भूयासं प्रजनिषीय तेन ब्रह्मणा तेन छन्दसा तया देवतयाऽङ्गिरस्वद् ध्रुवास् सीदत।—काठककृष्णयजुर्वेदसंहिता (३९।१३ [३३।९०])।

# (ञ)यजुर्वेदिनां परम्परयाऽऽगतं लगधमुनिप्रोक्तं परिष्कृतं
# वेदाङ्गज्योतिषम्

[प्रणाम तथा प्रतिज्ञा]

पञ्चसंवत्सरमयं युगाध्यक्षं प्रजापतिम्।
दिनर्त्वयनमासाङ्गं प्रणम्य शिरसा शुचिः ॥१॥

ज्योतिषामयनं पुण्यं प्रवक्ष्याम्यनुपूर्वशः।
सम्मतं ब्राह्मणेन्द्राणां यज्ञकालार्थसिद्धये ॥२॥

[ज्योतिषज्ञानको आवश्यकता]

वेदा हि यज्ञार्थमभिप्रवृत्ताः कालानुपूर्व्या विहिताश् च यज्ञाः।
तस्मादिदं कालविधानशास्त्रं यो ज्योतिषं वेद स वेद यज्ञान् ॥३॥

[ज्योतिषप्रशंसा]

यथा शिखा मयूराणां नागानां मणयो यथा।
तद्वद् वेदाङ्गशास्त्राणां गणितं मूर्धनि स्थितम् ॥४।

[वेदाङ्गज्योतिषको प्रतिपाद्य विषय]

माघशुक्लप्रपन्नस्य पौषकृष्णसमापिनः।
युगस्य पञ्चवर्षस्य कालज्ञानं प्रचक्षते ॥५॥

[आदियुगको निरूपण]

स्वराक्रमेते सोमार्कौ यदा साकं सवासवौ।
स्यात् तदाऽऽदियुगं माघस् तपश्शुक्लोऽयनं ह्युदक् ॥६॥

[उदगयन-दक्षिणायनकालको निर्देश]

प्रपद्येते श्रविष्ठादौ सूर्याचन्द्रमसावुदक्।
सार्पार्धे दक्षिणाऽर्कस् तु माघ-श्रावणयोः सदा ॥७॥

[दिनमानको वृद्धि र रात्रिमानको ह्रासका आधारमा अयनको निरूपण]

घर्मवृद्धिरपां प्रस्थः क्षपाह्रास उदग्गतौ।
दक्षिणेतौ विपर्यासः षण्मुहूर्त्ययनेन तु ॥८॥

[आदियुगका सौर अयनका आरम्भका तिथि]

प्रथमं १ सप्तमं ७ चाहुरयनाद्यं त्रयोदशम् १३।
चतुर्थं ४ दशमं १० चैव द्विर् युग्मं बहुले त्वृतौ ॥९॥

[आदियुगका सौर अयनका आरम्भमा रहने चान्द्र नक्षत्र]

वसुस् त्वष्टा भवोऽजश् च मित्रः सर्पोऽश्विनौ जलम्।
धाता कश् चाऽयनाद्याः स्युरर्धपञ्चमभस् त्वृतुः ॥१०॥

[आदियुगका सौर ऋतु का आरम्भका तिथि र पञ्चपर्वा ऋतु]

एकान्तरेऽह्नि मासे च पूर्वान् कृत्वाऽऽदिरुत्तरः।
अर्धयोः पञ्चपर्वाणावृतू पञ्चदशाऽष्टमौ ॥११॥

[पक्षद्युहानव्यवस्था र पादपरिभाषादि]

द्यु हेयं पर्व चेत् पादे पादस् त्रिंशत् तु सैकिका।
भागात्मनाऽपमृज्यांऽशान् निर्दिशेदधिको यदि ॥१२॥

[पर्वराशिज्ञानको उपाय]

निरेकं द्वादशाभ्यस्तं द्विगुणं चाऽऽप्तसंयुतम्।
षष्ट्याषष्ट्या युतं द्वाभ्यां पर्वणां राशिरुच्यते ॥१३॥

[मतभेदसहित पर्वसम्मित काल]

स्युः पादोर्ध्वं त्रिपद्यायास् त्रिर् द्व्येकेऽह्नः कृते स्थितिम्।
साम्येनेन्दोः स्तृणोऽन्ये तु पञ्चकाः पर्वसम्मिताः ॥१४॥

[पर्वान्तमा सूर्य र चन्द्रबाट अथवा चन्द्रबाट भुक्त भांश जान्ने उपाय]

भाऽंशाः स्युरष्टकाः कार्याः पक्षद्वादशकोद्गताः।
एकादशगुणश् चोनः शुक्लेऽर्धं चैन्दवा यदि ॥१५॥

[पर्वभांशको स्थितिमा अन्य विशेष]

नवकैरुद्गतोऽंशः स्यादूनः सप्तगुणो भवेत्।
आवापस् त्वयुजेऽर्धं स्यात् पौलस्त्येऽस्तङ्गतेऽपरम् ॥१६॥

[भांशमूलक पर्वनक्षत्रज्ञानोपाय इत्यादि]

जावाद्यंशैः समं विद्यात् पूर्वार्धे पर्वसूत्तराः।
भाऽदानं स्याच् चतुर्दश्यां द्विभागेभ्योऽधिको यदि ॥१७॥

[अनेक प्रकारले उपयोग हुने जावादिनक्षत्रव्यवस्था]

१जौ २द्रा ३गः ४खे ५श्वे ६ही ७रो ८षाश्
९चिन् १०मू ११षक् १२ण्यः १३सू १४मा १५धा १६णः।

१७रे १८मृ(म्रे) १९घाः २०स्वा २१पो २२जः २३कृ २४ष्यो
२५ह २६ज्ये २७ष्ठा इत्यृक्षा लिङ्गैः ॥१८॥

[पर्वभादानकलाको ज्ञान गर्ने उपाय]

कार्या भाऽंशाऽष्टकस्थाने कला एकान्नविंशतिः ।
ऊनस्थाने तु सप्ततिमुद्वपेद् युक्तिसम्भवे ॥१९॥

[तिथिनक्षत्रको आदेशको व्यवस्था]

तिथिमेकादशाभ्यस्तां पर्वभांशसमन्विताम् ।
विभज्य भसमूहेन तिथिनक्षत्रमादिशेत् ॥२०॥

[तिथिभादानिका कला]

याः पर्वभादानकलास् तासु सप्तगुणा तिथिः ।
युक्ता ताश् च विजानीयात् तिथिभादानिकाः कलाः ॥२१॥

[तिथिसमाप्तिको काल]

अतीतपर्वभागेभ्यः शोधयेद् द्विगुणां तिथिम् ।
तेषु मण्डलभागेषु तिथिनिष्ठां गतो रविः ॥२२॥

[विषुवान् तिथि]

विषुवन्तं द्विरभ्यस्तं रूपोनं षड्गुणीकृतम् ।
पक्षा यदर्धं पक्षाणां तिथिः स विषुवान् स्मृतः ॥२३॥

[नाडिकाप्रमाण]

पलानि पञ्चाशदपां धृतानि तदाढकं द्रोणमतः प्रमेयम्
त्रिभिर् विहीनं कुडवैस्तु कार्यं तन् नाडिकायास्तु भवेत् प्रमाणम् ॥

[इष्टतिथिमा सूर्यनक्षत्रको ज्ञानको उपाय]

एकादशभिरभ्यस्य पर्वाणि नवभिस् तिथिम् ।
युगलब्धं सपर्व स्याद् वर्तमानाऽर्कभं क्रमात् ॥२५॥

[सूर्य नक्षत्रविशेषमा प्रवेश गर्ने काल जान्ने उपाय]

सूर्यर्क्षभागान् नवभिर् विभज्य शेषं द्विरभ्यस्य दिनोपभुक्तिः ।
तिथेर् युता भुक्तिदिनेषु कालोऽयोगे दिनैकादशकेन तद् भम् ॥२६॥

[रविदिवसभोग्य नक्षत्रांशमान इत्यादि]

त्रिंशी भशेषो दिवसांशभागश् चतुर्दशस्याऽप्युपनीय भिन्नम् ।
भार्धाऽधिके चापि गते परोऽंशो द्वावुक्तमेकं नवकै रवेर् द्यु ॥२७॥

[युगको र युगका अवयव दिनादिको सङ्ख्या]

त्रिशत्यह्नां सषट्षष्टिरब्दः ३६६ षट् ६ चर्तवोऽयने ।
मासा द्वादश १२ सौराः स्युरेतत् पञ्चगुणं युगम् ॥२८॥

[एक युगमा श्रविष्ठादिका उदयको सङ्ख्या]

उदया वासवस्य स्युर् दिनराशिः सपञ्चकः ।
ऋषेर् द्विषष्ट्या हीनः स्याद् विंशत्या सैकया स्तृणाम् ॥२९॥

[युगमा सूर्यनक्षत्र, चान्द्र अयन र पर्वको सङ्ख्या तथा कलाकाष्ठा]

पञ्चत्रिंशं शतं पौष्णमेकोनमयनान्यृषेः ।
पर्वणां स्याच् चतुष्पादी काष्ठानां चैव ताः कलाः ॥३०॥

[युगमा सावनमास, चान्द्रमास र नाक्षत्रमासको सङ्ख्या तथा
सावनादिमासका दिनको सङ्ख्या ]

सावनेन्दुस्तृमासानां षष्टिः सैकद्विसप्तिका ६१, ६२, ६७ ।
द्युत्रिंशत् सावनः ३० साऽर्धः सौरः $३०\frac{१}{२}$ स्तृणां स पर्ययः $२७\frac{२१}{६७}$ ॥३१॥

[नक्षत्रका देवता]

अग्निः प्रजापतिः सोमो रुद्रोऽदितिर् बृहस्पतिः ।
सर्पाश् च पितरश् चैव भगश् चैवाऽर्यमाऽपि च ॥३२॥

सविता त्वष्टाऽथ वायुश् चेन्द्राऽग्नी मित्र एव च ।
इन्द्रो निरृतिरापो वै विश्वेदेवास् तथैव च ॥३३॥

विष्णुर् वसवो वरुणोऽज एकपात् तथैव च ।
अहिर्बुध्न्यस् तथा पूषा अश्विनौ यम एव च ॥३४॥

[यजमानको यज्ञकर्मार्थ नक्षत्रज नाम
नक्षत्रदेवताबाट राख्ने विधि]

नक्षत्रदेवता ह्येता एताभिर् यज्ञकर्मणि ।
यजमानस्य शास्त्रज्ञैर् नाम नक्षत्रजं स्मृतम् ॥३५॥

[नक्षत्रविशेषको उग्र र क्रूर सञ्ज्ञा]

उग्राण्यार्द्रा च चित्रा च विशाखा श्रवणोऽश्वयुक् ।
क्रूराणि तु मघाः स्वातिर् ज्येष्ठा मूलं यमस्य यत् ॥३६॥

[वैदिक अधिकमासको व्यवस्था]

द्व्यूनं द्विषष्टिभागेन दिनं सौराच् च पार्वणम् ।
यत्कृतावुपजायेते मध्येऽन्ते चाऽधिमासकौ ॥३७॥

[नाडिकाको र मुहूर्तको परिभाषा, दिनगत मुहूर्तसङ्ख्या
र कलासङ्ख्या]

कला दश सविंशाः $१०\frac{१}{२०}$ स्यान् नाडिका, ते २ मुहूर्तकः ।
द्यु त्रिंशत् ३०, तत् कलानां तु षट्शती त्र्यधिका ६०३ भवेत् ॥

[चन्द्रको र सूर्यको नक्षत्रयोगको काल तथा काष्ठाको परिभाषा]

**ससप्तकं ६१० भयुक् सोमः सूर्यो द्यूनि त्रयोदश।**
**नवमानि च पञ्चाऽह्नः १३⁵⁄₉ काष्ठा पञ्चाऽक्षरा ५ भवेत्॥३९॥**

[दिनमान जान्ने उपाय]

**यदुत्तरस्याऽयनतो गतं स्याच् छेषं तथा दक्षिणतोऽयनस्य।**
**तदेकषष्ट्या द्विगुणं विभक्तं सद्वादशं स्याद् दिवसप्रमाणम्॥४०॥**

[ऋतुशेष जान्ने उपाय]

**यदर्धं दिनभागानां सदा पर्वणिपर्वणि।**
**ऋतुशेषं तु तद् विद्यात् संख्याय सह पर्वणाम्॥४१॥**

[प्रस्तुत ग्रन्थको कालज्ञानोपायसमुद्देशपरत्व र अन्यकल्पनाधारत्व ]

**इत्युपायसमुद्देशो भूयोऽप्येनं प्रकल्पयेत्।**
**ज्ञेयराशिं गताभ्यस्तं विभजेज् ज्ञातराशिना॥४२॥**

[वेदाङ्गज्योतिषको प्रतिपाद्य विषय र प्रवक्ताको निर्देशबाट ग्रन्थको उपसंहार]

**इत्येतन् मासवर्षाणां मुहूर्तोदयपर्वणाम्।**
**दिनर्त्वयनमासानां व्याख्यानं लगधोऽब्रवीत्॥४३॥**

[ग्रन्थार्थज्ञानको फल]

**सोमसूर्यस्तृचरितं विद्वान् वेदविदश्नुते।**
**सोमसूर्यस्तृचरितं लोकं लोके च सन्ततिम्,**
**लोकं लोके च सन्ततिमिति॥४४॥**

॥इति यजुर्वेदिनां परम्परयाऽऽगतं परिष्कृतं वेदाङ्गज्योतिषम् समाप्तम्॥

## (ट) पुराण-इतिहासादिमा वैदिक कालगणनापद्धति

श्रवणान्तं धनिष्ठादि युगं स्यात् पञ्चवार्षिकम्।
भानोर् गतिविशेषेण चक्रवत् परिवर्तते॥

—लिङ्गपुराण १।६१।५५-५६।

सर्वग्रहाणामेतेषामादिरादित्य उच्यते।
ताराग्रहाणां शुक्रस् तु केतूनां चैव धूमवान्॥
ध्रुवः कीलो ग्रहाणां तु विभक्तानां चतुर्दिशम्।
नक्षत्राणां श्रविष्ठा स्यादयनानां तथोत्तरम्॥
वर्षाणामपि पञ्चानामाद्यः संवत्सरः स्मृतः।
ऋतूनां शिशिरश् चाऽपि मासानां माघ एव च॥
पक्षाणां शुक्लपक्षश् च तिथीनां प्रतिपत् तथा।
अहोरात्रविभागानामहश् चाऽपि प्रकीर्तितम्॥
मुहूर्तानां तथैवाऽऽदिर् मुहूर्तो रुद्रदैवतः॥

—ब्रह्माण्डपुराण पूर्व. २४।१३९–१४३, लिङ्ग-पुराण १।६१।५०–५४, वायुपुराण १।५३।१११–११५।

अहः पूर्वं ततो रात्रिर् मासाः शुक्लादयस् तथा।
श्रविष्ठादीनि ऋक्षाणि ऋतवः शिशिरादयः॥

—महाभारत शोधसंस्करण आश्वमेधिकपर्व ४४।२।

अहान्यस्तमयान्तानि उदयान्ता च शर्वरी।

—महाभारत, आश्वमेधिकपर्व ४४।१८।

कालमानमत ऊर्ध्वम्। त्रुटो लवो निमेषः काष्ठा कला नाडिका मुहूर्तः पूर्वापरभागौ दिवसो रात्रिः पक्षो मास ऋतुरयनं संवत्सरो युगमिति कालाः। शिशिराद्युत्तरायणम्। वर्षादि दक्षिणायनम्। द्व्ययनः संवत्सरः। पञ्चसंवत्सरो युगम्।

—कौटलीय अर्थशास्त्र २।२०।

तस्य संवत्सरात्मनो भगवानादित्यो गतिविशेषेणाऽक्षिनिमेष-काष्ठा-कला–मुहूर्ता-ऽहोरात्र–पक्ष–मासर्त्वयन-संवत्सर-युग-प्रविभागं करोति। तत्र लघ्वक्षरोच्चारणमात्रोऽक्षिनिमेषः। पञ्चदशाक्षिनिमेषाः काष्ठा। त्रिंशत् काष्ठाः कला। विंशतिकलो मुहूर्तः कलादशभागश् च। त्रिंशन्मुहूर्तमहोरात्रम्। पञ्चदशाऽहोरात्राणि पक्षः। स च द्विविधः शुक्लः कृष्णश् च। तौ मासः। तत्र माघादयो द्वादश मासा द्विमासिकमृतुं कृत्वा षड्तवो भवन्ति। ते शिशिर-वसन्त-ग्रीष्म-वर्षा-शरद्-धेमन्ताः। तेषां तपस्-तपस्यौ शिशिरः। मधु-माधवौ वसन्तः। शुचि-शुक्रौ ग्रीष्मः। नभोनभस्यौ वर्षाः। इषोर्जौ शरत्। सहस्-सहस्यौ हेमन्तः इति। त एते शीतोष्णवर्षलक्षणाश् *चन्द्रादित्ययोः* काल-विभागकरत्वादयने द्वे भवतो दक्षिणमुत्तरं च। तयोर् दक्षिणं वर्षा-शरद्-धेमन्ताः। तेषु भगवानाप्यायते सोमः, अम्ल-लवण-मधुराश् च रसा बलवन्तो भवन्ति, उत्तरोत्तरं च सर्वप्राणिनां बलमभिवर्धते। उत्तरं च शिशिर-वसन्त-ग्रीष्माः। तेषु भगवानाप्यायतेऽर्कः, तिक्त-कषायकटुकाश् च रसा बलवन्तो भवन्ति, उत्तरोत्तरं च सर्वप्राणिनां बलमपहीयते। ... अथ खल्वयने द्वे युगपत् संवत्सरो भवति। ते तु पञ्च युगमिति संज्ञां लभन्ते। स एष निमेषादि-युगपर्यन्तः कालश् चक्रवत् परिवर्तमानः कालचक्रमुच्यत इत्येके।

—सुश्रुतसंहिता, सूत्रस्थान ६।३-९।

# वैदिकतिथिपत्रम् (वैदिक पात्रो)

## कलिसंवत् ५०८२, सौम्यं युगम् (८५–९), परिवत्सरः (२) (चान्द्रः कीलकः संवत्सरः ४२), उदगयनम्, शिशिर ऋतुः, तपाः [माघः] मासः, शुक्लः पक्षः

विक्रमसंवत् २०७३, शकान्तसंवत् (शकसंवत्) १९३८, बार्हस्पत्यः साधारणः संवत्सरः (४४), **वृश्चिकमासः** (मङ्सिर), **मार्गशुक्लपक्षः** (नेपालसंवत् ११३७, थिंलाथ्वः=मार्गशुक्लपक्षः) [नोवेम्बर-डिसेम्बर, २०१६ क्रैस्ताब्दः]

| वै.ति. | करणम् | लौ.ति. | घण्टा (बजेसम्म) | वै.न. | मुहूर्तः | घण्टा (बजेसम्म) | लौ.न. | घण्टा (बजेसम्म) | योगाः | घण्टा (बजेसम्म) | योगाः | चन्द्रराशिः | दिनमा. (घ.मि.) | सू.उ. (बजे) | सू.अ. (बजे) | अहर्गणः | वारः | गते | ता. | २०७३ मङ्सिर १५ – २९ |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| **प्रतिपदा** | कौस्तु. | १ | २०:२१ | **ज्ये** | **२५।१३** | **२७:०७** | ज्ये. | २६:५० | धृ. | २९:५० | ध्वाङ्क्षः | २६:५० | १०::३२ | ६:३६ | १७:०८ | ३४५ | **बु** | **१५** | **30** | **श्रौतिनां वैदिकानां दर्शेष्टिः, *वैदिकनववर्षारम्भः* परिवत्सरारम्भः,**☾ |
| **द्वितीया** | बाल. | २ | २२:२३ | **मू** | **२५।१९** | **२७:२४** | मू. | २९:१६ | शू. | ३०:१३ | धूम्रः | धनुः | १०:३१ | ६:३७ | १७:०८ | ३४६ | **बृ** | **१६** | **1** | **दिसम्बर**मासप्रारम्भः (२०१६ क्रैस्ताब्दः) |
| **तृतीया** | तैति. | ३ | २४:१० | **पूषा** | **२६।६** | **२७:४१** | पू. | अहोरात्र | ग. | ३०:२३ | वर्धमा. | धनुः | १०:३१ | ६:३७ | १७:०८ | ३४७ | **शु** | **१७** | **2** | ☾ **चान्द्रकीलकसंवत्सर(४२)-प्रारम्भः, उदगयनारम्भः,** ☽ |
| **चतुर्थी** | वाणि. | ४ | २५:३७ | **उषा** | **२६।१३** | **२७:५८** | पू. | ७:२६ | वृ. | ३०:१८ | मातङ्गः | १३:५७ | १०:३० | ६:३९ | १७:०९ | ३४८ | **श** | **१८** | **3** | ☽**वैदिकशिशिरर्त्वारम्भः,** तिब्बतीयानां ह्लोसारः, पौराणिकानामग्निव्रतम् |
| **पञ्चमी** | बवम् | ५ | २६:४० | **श्र** | **२७।०** | **२८:१६** | उ. | ९:१८ | ध्रु. | २९:५५ | मुसल. | मकरः | १०:२९ | ६:३९ | १७:०९ | ३४९ | **आ** | **१९** | **4** | पौराणिकानां विवाहपञ्चमी |
| **षष्ठी** | कौल. | ६ | २७:१३ | **ध** | **२७।७** | **२८:३३** | श्र. | १०:४४ | व्या. | २९:०७ | सिद्धिः | २३:१७ | १०:२९ | ६:४० | १७:०९ | ३५० | **सो** | **२०** | **5** | |
| **सप्तमी** | गराजिः | ७ | २७:०९ | **श** | **२७।१४** | **२८:५०** | ध. | ११:३९ | ह. | २७:५० | उत्पातः | कुम्भः | १०:२८ | ६:४१ | १७:०९ | ३५१ | **म** | **२१** | **6** | **चित्रायां गुरुः (बृहस्पतिः)**◈ |
| **अष्टमी** | विष्टिः | ८ | २६:२३ | **पूभ** | **२८।०** | **२९:०७** | श. | ११:५७ | व. | २६:०१ | मानसम् | २९:४३ | १०:२८ | ६:४१ | १७:०९ | ३५२ | **बु** | **२२** | **7** | **◈ २९।०५ (१८:१९)** |
| **नवमी** | बाल. | ९ | २४:५४ | **उभ** | **२८।७** | **२९:२४** | पू. | ११:३२ | सि. | २३:३८ | मुद्गरः | मीनः | १०:२७ | ६:४२ | १७:०९ | ३५३ | **बृ** | **२३** | **8** | |
| **दशमी** | तैति. | १० | २२:४४ | **रे** | **२८।१४** | **२९:४१** | उ. | १०:२६ | व्य. | २०:४१ | ध्वजः | मीनः | १०:२७ | ६:४३ | १७:०९ | ३५४ | **शु** | **२४** | **9** | |
| **एकादशी** | वाणि. | ११ | १९:५८ | **अश्व** | **२९।१** | **२९:५९** | रे. | ८:४२<br>३०:२५ | व. | १७:१६ | धाता | ८:४२ | १०:२६ | ६:४४ | १७:१० | ३५५ | **श** | **२५** | **10** | पौराणिकानांमोक्षदा एकादशी☞ |
| **द्वादशी** | बवम् | १२ | १६:४४ | **भ** | **२९।८** | **३०:१६** | भ. | २७:४४ | प. | १३:२६ | कालद. | मेषः | १०:२६ | ६:४४ | १७:१० | ३५६ | **आ** | **२६** | **11** | ☞मन्वादिः, गीताजयन्ती |
| **त्रयोदशी** | कौल. | १३ | १३:११ | **कृ** | **२९।१५** | **३०:३३** | कृ. | २४:५० | शि. | ९:२०<br>२९:०५ | स्थिरः | ९:०१ | १०:२५ | ६:४५ | १७:१० | ३५७ | **सो** | **२७** | **12** | |
| **चतुर्दशी** | गराजिः | १४ | ९:३०<br>२९:५२ | **रो** | **अहोरात्र** | **अहोरात्र** | रो. | २१:५३ | सा. | २४:५० | मातङ्गः | वृषः | १०:२५ | ६:४६ | १७:१० | ३५८ | **म** | **२८** | **13** | ○(योमरिपुह्नि), उँधौलि |
| **पूर्णिमा** | विष्टिः | १ | २६:२६ | **रो** | **०।१** | **६:५०** | मृ. | १९:०६ | शु. | २०:४४ | अमृतम् | ८:२८ | १०:२५ | ६:४६ | १७:११ | ३५९ | **बु** | **२९** | **14** | **श्रौतिनां वैदिकानाम् उपवसथः,** पौराणिकानां धान्यपूर्णिमा, गैडुपूजा ○ |

### वैदिक नववर्ष

दिनमान बड्न थाल्दा सौर उत्तरायण लाग्छ। तेसैको प्रायः अगाडि पर्ने शुक्ल-प्रतिपदाबाट वैदिक नववर्ष लाग्छ। उत्तरा-यण देवताको दिन र दक्षिणायन रात हो। दिन र रातले अहोरात्र भएजस्तै उत्तरायण र दक्षिणायन मिलेर एक वर्ष पूरा हुञ्छ, देवताको अहोरात्र हुञ्छ। तेसैले वेदाङ्ग-ज्योतिषमा उत्तरायणबाट वर्षको आरम्भ मानिएको छ। विक्रमसंवत्को आरम्भ पनि एसै दिन मान्न सकिञ्छ।

**तपःशुक्लप्रतिपदायां गतकलिसावनाऽहर्गणः (कलियुगको प्रारम्भदेखि एस वर्ष तपःशुक्लप्रतिपदासम्म बितेका दिनहरुको सङ्ख्या) १८५५७९१, तपःशुक्लषष्ठ्यां ज्येष्ठायां सूर्यः २६।६ (२७:४२)।** गृह्यसूत्रमा पाणिग्रहणविधान— **उदगयन आपूर्यमाणपक्षे पुण्याहे कुमार्याः पाणिङ् गृह्णीयात्**— पारस्करगृह्यसूत्र १।४।५; जैमिनीयधर्ममीमांसाशास्त्रमा दैवकर्मकालनिर्णय— **उदगयन-पूर्वपक्षा-ऽहःपुण्याहेषु दैवानि स्मृतिरूपान्यार्थदर्शनात्। अहनि च कर्मसाकल्यम्।**—जैमिनीयधर्ममीमांसासूत्र ६।८।२३-२४। **पूर्वाह्णादौ देवकार्याणि कुर्यात्।**—मण्डनमिश्रकृत-मीमांसानुक्रमणिका ६।८।६। माद्रिकास्नाने (माहेन्द्रीस्नाने) मन्त्रः— **महेन्द्रनगसम्भूते गण्डकीक्षेत्रमध्यगे। नीलाभ्रेऽघौघशमनि पापं मे हर माद्रिके॥**—वैदिकमन्त्रसङ्ग्रहपरिशिष्टे (पृ.१२८)।

**१ २०७३।८।२२ प्रातः ६:०० बजेको ग्रहको स्थिति र दैनिक गति**

| ग्रह | स्थिति | दैनिक गति | ग्रह | स्थिति | दैनिक गति |
|---|---|---|---|---|---|
| सू | ७:२०:५९:४१ | ६१:०१ | शु | ९:०४:५८:०१ | ६९:०३ |
| म | ९:२६:२०:४८ | ४५:१४ | श | ७:२४:०६:३४ | ७:०५ |
| बु | ८:११:०६:४६ | ५७:४१ | रा | ४:१३:१३:०६ | ३:११ |
| बृ | ५:२३:२९:०५ | ८:५७ | | **९।४–१६:३६ बुध वक्री** | |

९बु
७
म१०शु
सू ८ श
६बृ
११ के
५ रा
१२
२
४
१
३

# *वैदिकतिथिपत्रे* कलिसंवत् ५०८२, सौम्यं युगम् (८५-९), परिवत्सरः (२) (चान्द्रः कीलकः संवत्सरः ४२), उदगयनम्, शिशिर ऋतुः, तपाः [माघः] मासः, कृष्णः पक्षः

विक्रमसंवत् २०७३, शकान्तसंवत् (शकसंवत्) १९३८, बार्हस्पत्यः साधारणः संवत्सरः (४४), **वृश्चिकमास-धनुर्मासौ** (मङ्सिर-पुस), **पौषकृष्णपक्षः** (नेपालसंवत् ११३७, थिंलागाः=मार्गकृष्णपक्षः) [डिसेम्बर २०१६ क्रै.]

| वै.ति. | करणम् | लौ.ति. | घण्टा | वै.न. | मुहूर्तः | घण्टा | लौ.न. | घण्टा | योगाः | घण्टा | योगाः | चन्द्रराशिः | दिनमा. | सू.उ. | सू.अ. | अहर्गणः | वारः | गते | ता. | २०७३ मङ्सिर ३० – पुस १३ |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| **प्रतिपदा** | बाल. | २ | २३:२४ | **मृ** | **०।८** | **७:०७** | आ. | १६:३९ | शु. | १६:५५ | काणः | मिथुनम् | १०:२४ | ६:४७ | १७:११ | ३६० | **बृ** | ३० | 15 | **श्रौतिनां वैदिकानां पूर्णमासेष्टिः, निरूढपशुबन्धः,** पौराणिकानामग्निव्रतम् ◈ |
| **द्वितीया** | तैति. | ३ | २०:५७ | **आ** | **०।१५** | **७:२४** | पुन | १४:४३ | ब्र. | १३:३१ | लुम्बः | ९:०९ | १०:२४ | ६:४७ | १७:१२ | ३६१ | **शु** | १ | 16 | **धनुर्मासप्रारम्भः (पुस) २०७३** ◈ धनुषि सूर्यः ५६।२७ (२९:२४) |
| **तृतीया** | वाणि. | ४ | १९:१२ | **पुन** | **१।२** | **७:४१** | पु. | १३:२७ | ऐ. | १०:३९ | मित्रम् | कर्कटः | १०:२४ | ६:४८ | १७:१२ | ३६२ | **श** | २ | 17 | |
| **चतुर्थी** | बवम् | ५ | १८:१७ | **पु** | **१।९** | **७:५९** | अ. | १२:५८ | वै. | ८:२५ | वज्रम् | १२:५८ | १०:२४ | ६:४९ | १७:१२ | ३६३ | **आ** | ३ | 18 | |
| **पञ्चमी** | कौल. | ६ | १८:१४ | **अ** | **१।१६** | **८:१६** | म. | १३:१९ | वि. | ६:५२ ३०:१७ | ध्वाङ्क्षः | सिंहः | १०:२४ | ६:४९ | १७:१३ | ३६४ | **सो** | ४ | 19 | |
| **षष्ठी** | गराजिः | ७ | १९:०२ | **म** | **२।३** | **८:३३** | पू. | १४:३० | आ. | २९:४२ | धूम्रः | २०:५६ | १०:२४ | ६:५० | १७:१३ | ३६५ | **म** | ५ | 20 | |
| **सप्तमी** | विष्टिः | ८ | २०:३५ | **पूफ** | **२।१०** | **८:५०** | उ. | १६:२६ | सौ. | २९:५ | वर्धमा. | कन्या | १०:२४ | ६:५० | १७:१४ | १ | **बु** | ६ | 21 | **दृक्सिद्ध-वैदिक-सौरोदगयनारम्भः (वास्तविक सौर उत्तरायणको** ☼ |
| **अष्टमी** | बाल. | ९ | २२:४३ | **उफ** | **२।१७** | **९:०७** | ह. | १८:५६ | शो. | ३०:३४ | राक्षसः | कन्या | १०:२४ | ६:५१ | १७:१४ | २ | **बृ** | ७ | 22 | **स्मार्तानां वैदिकानाम् एकाष्टका** |
| **नवमी** | तैति. | १० | २५:१२ | **हस्तः** | **३।४** | **९:२४** | चि. | २१:४९ | अ. | अहोरात्र | मुसल. | ८:२१ | १०:२४ | ६:५१ | १७:१५ | ३ | **शु** | ८ | 23 | **स्मार्तानां वैदिकानाम् अन्वष्टका** |
| **दशमी** | वाणि. | ११ | २७:५० | **चित्रा** | **३।११** | **९:४२** | स्वा. | २४:५१ | अ. | ७:२४ | सिद्धिः | तुला | १०:२४ | ६:५१ | १७:१५ | ४ | **श** | ९ | 24 | **☼आरम्भ) उत्तरायणसङ्क्रान्तिः, सायनमकरे सूर्यः २३।२८ (१६:११)** |
| **एकादशी** | बवम् | १२ | ३०:२५ | **स्वा** | **३।१८** | **९:५९** | वि. | २७:५२ | सु. | ८:१८ | उत्पातः | २१:०८ | १०:२४ | ६:५२ | १७:१६ | ५ | **आ** | १० | 25 | पौराणिकानां सफला एकादशी |
| **द्वादशी** | कौल. | १३ | अहोरात्र | **वि** | **४।४** | **१०:१६** | अ. | ३०:४२ | धृ. | ९:०९ | मानसम् | वृश्चिकः | १०:२४ | ६:५२ | १७:१७ | ६ | **सो** | ११ | 26 | ⊙ हल-कण्डनी-यन्त्रक-मन्थनीकर्म-सायम्भोजन-परिहारदिनम् |
| **त्रयोदशी** | गराजिः | १३ | ८:४८ | **अनु** | **४।१२** | **१०:३३** | ज्ये. | अहोरात्र | शू. | ९:५१ | मुद्गरः | वृश्चिकः | १०:२४ | ६:५३ | १७:१७ | ७ | **म** | १२ | 27 | ● **दर्शश्राद्धम्**, मौनीअमावास्या, गोकर्णप्रदेशे विष्णुपादुकाश्राद्धम् ⊙ |
| **अमावास्या** | चतुष्. | १४ | १०:५४ | **ज्ये** | **४।१९** | **१०:५०** | ज्ये. | ९:१६ | ग. | १०:१९ | ध्वाङ्क्षः | ९:१६ | १०:२५ | ६:५३ | १७:१८ | ८ | **बु** | १३ | 28 | (दिसिचह्रेपूजा), **श्रौतिनां वैदिकानां पिण्डपितृयज्ञः, स्मार्तानां वैदिकानां** ● |

**सौरचान्द्र अयन—**दिनमान बड्न थाल्दा सौर उत्तरायण र घट्न थाल्दा सौर दक्षिणायन लाग्छ। धार्मिक कार्यका लागि त सौर अयन नलिएर एस वैदिकतिथिपत्रमा देखाएजस्तो सौरअयनसापेक्ष शुक्लप्रतिपदाबाट प्रारम्भ हुने चान्द्र अयन नै लिन पर्छ। सङ्कल्पमा तेसैको उल्लेख गर्न पर्छ।

तपःकृष्णप्रतिपदायां गतकलिसावनाऽहर्गणः १८५५८०६, तपःकृष्णपञ्चम्यां मूलबर्हण्यां सूर्यः **११।१८ (१६:२२)।**

**अमावास्यामा विशेष—** वैदिक सिद्धान्तअनुसार जुन दिन पिण्डपितृयज्ञ वा दर्शश्राद्ध हुञ्छ तेसै दिन **हलो बार्ने, ढिकि-जाँतो-ठेको बार्ने, निशि बार्ने** काम गर्नपर्ने हुनाले तेसै दिन **"हल-कण्डनी-यन्त्रक-मन्थनीकर्म-सायम्भोजनपरिहारदिनम्"** भन्ने उल्लेख गरिएको हो। (**हल**=हलो, **कण्डनी**=ढिकि, **यन्त्रक**=जाँतो, **सायम्भोजन**=बेलुकाको भोजन, **परिहार**=बार्ने काम, त्याग गर्ने काम)। **अमावास्यां नैव छिन्द्याद् वृक्ष-गुल्मौषधीर् द्विजः। महादेवः स्मृतः सोमस् तस्याऽऽत्मा ह्यौषधीगणः॥**–ब्रह्माण्डपुराण १।१०।६२। **चन्द्रक्षयेऽमतिर् विप्रो यो युनक्ति वृषं क्वचित्। तं पञ्चदश वर्षाणि त्यजन्ति पितरोऽहितम्॥**–स्मृतिसन्दर्भ, पृ. ७४५। देवघट्टस्नानमन्त्रः–**यत्र विष्णुः प्राङ्मुखश् च शिवः प्रत्यङ्मुखः स्थितः। रक्षार्थं सततं तत्र क्षेत्रे हरिहराभिधे॥ सितासिते सरिच्छ्रेष्ठे देवानामपि दुर्लभे। युवयोस् सङ्गमे ह्यादिप्रयागे स्नामि सिद्धये॥**—वैदिकमन्त्रसङ्ग्रहपरिशिष्टे (पृ. ११९)।

२ २०७३।९।७ प्रातः ६:००

| | | | | | |
|---|---|---|---|---|---|
| सू | ८:०६:२०:०२ | ६१:०६ | शु | ९:२२:१२:३८ | ६६:३३ |
| म | १०:०७:४४:३२ | ४५:१९ | श | ७:२५:५७:३० | ६:५७ |
| बु | ८:२०:१६:०९ | -७०:४४ | रा | ४:१२:३०:२४ | ३:११ |
| बृ | ५:२५:४३:५२ | ७:१२ | | | |

९।७–२२:१४ बुध प. अस्त

९।१२–८:३२ शनिको उदय

९।१९–२३:१० बुध पू. उदय

१० शु, ८ श, ११ मके, सू ९ बु, ७, १२, ६ बृ, १, ३, ५ रा, २, ४

 *वैदिकतिथिपत्रे* **कलिसंवत् ५०८२, सौम्यं युगम् (८५-९), परिवत्सरः (२) (चान्द्रः कीलकः संवत्सरः ४२), उदगयनम्, शिशिरः ऋतुः, तपस्यः [फाल्गुनः] मासः, शुक्लः पक्षः**

विक्रमसंवत् २०७३, शकान्तसंवत् (शकसंवत्) १९३८, बार्हस्पत्यः साधारणः संवत्सरः (४४), **धनुर्मासः** (पुस), **पौषशुक्लपक्षः** (नेपालसंवत् ११३७, पोहेलाथ्वः=पौषशुक्लपक्षः) [डिसेम्बर, २०१६-जनबरि, २०१७ क्रैस्ताब्दः]

| वै.ति. | करणम् | लौ.ति. | घण्टा | वै.न. | मुहूर्तः | घण्टा | लौ.न. | घण्टा | योगाः | घण्टा | योगाः | चन्द्रराशिः | दिनमा. | सू.उ. | सू.अ. | अहर्गणः | वारः | गते | ता. | २०७३ पुस १४ – २८ |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| प्रतिपदा | कौस्तु. | ३० | १२:३९ | मू | ५।५ | ११:०७ | मू. | ११:३० | वृ. | १०:३२ | धूम्रः | धनुः | १०:२५ | ६:५४ | १७:१८ | ९ | बृ | १४ | 29 | **श्रौतिनां वैदिकानां दर्शेष्टिः, श्रौतिनां वैदिकानां संवत्सरेप्सूनां** ☾ |
| द्वितीया | बाल. | १ | १४:०२ | पूषा | ५।१३ | ११:२५ | पू. | १३:२३ | ध्रु. | १०:२८ | वर्धमा. | १९:४९ | १०:२५ | ६:५४ | १७:१९ | १० | शु | १५ | 30 | तमुह्लोसारः (गुरुङ समुदायको नववर्ष) |
| तृतीया | तैति. | २ | १५:०३ | उषा | ५।२० | ११:४२ | उ. | १४:५६ | व्या. | १०:०८ | राक्षसः | मकरः | १०:२६ | ६:५४ | १७:२० | ११ | श | १६ | 31 | ☾ **शुनासीरीयपर्व,** (तोल-ह्लोसारः) पौराणिकानामग्निव्रतम् |
| चतुर्थी | वाणि. | ३ | १५:४३ | श्र | ६।७ | ११:५९ | श्र. | १६:०९ | ह. | ९:३२ | गदः | २८:३८ | १०:२६ | ६:५४ | १७:२० | १२ | आ | १७ | 1 | **जनबरि**मासप्रारम्भः (**२०१७** क्रैस्ताब्दः) |
| पञ्चमी | बवम् | ४ | १६:०१ | ध | ६।१४ | १२:१६ | ध. | १७:०० | व. | ८:४० | शुभः | कुम्भः | १०:२६ | ६:५५ | १७:२१ | १३ | सो | १८ | 2 | |
| षष्ठी | कौल. | ५ | १५:५५ | श | ७।१ | १२:३३ | श. | १७:२८ | सि. | ७:२९ २९:५५ | मृत्युः | कुम्भः | १०:२७ | ६:५५ | १७:२२ | १४ | म | १९ | 3 | |
| सप्तमी | गराजिः | ६ | १५:२२ | पूभ | ७।८ | १२:५० | पू. | १७:२९ | व. | २८:०५ | पद्मम् | ११:३२ | १०:२७ | ६:५५ | १७:२३ | १५ | बु | २० | 4 | |
| अष्टमी | विष्टिः | ७ | १४:१९ | उभ | ७।१५ | १३:०७ | उ. | १७:०१ | प. | २५:४८ | छत्रम् | मीनः | १०:२८ | ६:५५ | १७:२३ | १६ | बृ | २१ | 5 | |
| नवमी | बाल. | ८ | १२:४५ | रे | ८।२ | १३:२५ | रे. | १६:०२ | शि. | २३:०६ | श्रीवत्सः | १६:०२ | १०:२८ | ६:५६ | १७:२४ | १७ | शु | २२ | 6 | |
| दशमी | तैति. | ९ | १०:४० | अ | ८।९ | १३:४२ | अ. | १४:३४ | सि. | २०:०१ | सौम्यः | मेषः | १०:२९ | ६:५६ | १७:२५ | १८ | श | २३ | 7 | |
| एकादशी | वाणि. | १० | ८:१० २९:१९ | भ | ८।१६ | १३:५९ | भ. | १२:४१ | सा. | १६:३७ | कालद. | १८:१० | १०:३० | ६:५६ | १७:२६ | १९ | आ | २४ | 8 | पौराणिकानां पुत्रदा एकादशी |
| द्वादशी | बवम् | १२ | २६:१५ | कृ | ९।३ | १४:१६ | कृ. | १०:३० | शु. | १२:५८ | स्थिरः | वृषः | १०:३० | ६:५६ | १७:२६ | २० | सो | २५ | 9 | |
| त्रयोदशी | कौल. | १३ | २३:०८ | रो | ९।१० | १४:३३ | रो. | ८:०८ २९:४५ | शु. | ९:१२ २९:३२ | मातङ्गः | १८:५६ | १०:३१ | ६:५६ | १७:२७ | २१ | म | २६ | 10 | ○माघस्नानारम्भः, लौकिकानां स्वस्थानीव्रतप्रारम्भः (मिलापुह्नि) |
| चतुर्दशी | गराजिः | १४ | २०:०६ | मृ | ९।१७ | १४:५० | आ. | २७:३० | ऐ. | २५:४६ | मुसल. | मिथुनम् | १०:३२ | ६:५६ | १७:२८ | २२ | बु | २७ | 11 | **श्रौतिनां वैदिकानां शुनासीरीयपर्व** |
| पूर्णिमा | विष्टिः | १५ | १७:१९ | आ | १०।५ | १५:०८ | पुन | २५:३३ | वै. | २२:२० | सिद्धिः | २०:०१ | १०:३३ | ६:५६ | १७:२९ | २३ | बृ | २८ | 12 | **श्रौतिनां वैदिकानाम् उपवसथः, वैश्वदेवपर्व,** पौराणिकानाम् ○ |

**परिवत्सरमा यवदान (जौको दान) गर्न पर्ने विधान**

संवत्सरे तिलान् दद्याद् यवाँस् तु परिवत्सरे।
इडापूर्वे च वस्त्राणि धान्यं चाऽप्यनुवत्सरे॥
इद्वत्सरे तु रजतं क्रमाद् देयानि शक्तितः।
—मार्कण्डेयस्मृति, स्मृतिसन्दर्भ–६, पृ.१३४।

**तपस्यशुक्लप्रतिपदायां गतकलिसावनाऽहर्गणः १८५५८२०, तपस्यशुक्लचतुर्थ्यां पूर्वाषाढासु सूर्यः २७।१३ (२९:२)।**

**शुक्लपक्षे रात्रिकरणानि—** प्रतिपदायाम्—**बवम्**, द्वितीयायाम्—**कौलवम्**, तृतीयायाम्—**गराजिः**, चतुर्थ्याम्—**विष्टिः**, पञ्चम्याम्—**बालवम्**, षष्ठ्याम्—**तैतिलम्**, सप्तम्याम्—**वाणिजम्**, अष्टम्याम्—**बवम्**, नवम्याम्—**कौलवम्**, दशम्याम्—**गराजिः**, एकादश्याम्—**विष्टिः**, द्वादश्याम्—**बालवम्**, त्रयोदश्याम्—**तैतिलम्**, चतुर्दश्याम्—**वाणिजम्**, पूर्णिमायाम्—**बवम्**। सन्ध्योपासनम्— **ब्राह्मणः सर्वयत्नेन सायम्प्रातः समाहितः। सन्ध्यामात्रपरो भूयात् तावन्मात्रात् तरिष्यति॥**—लौगाक्षिस्मृति, स्मृतिसन्दर्भ, षष्ठभाग, पृ.२८५। ऋतुचर्या—**शिशिरे पवनः शीतो हिमपातोऽपि वा भवेत्। तदा वस्त्रं सुष्ठु धार्यं जलं पेयं कवोष्णकम्॥** धर्म— **सुखं हि सर्वैराकाङ्क्ष्यं तच् च धर्मसमुद्भवम्। तस्माद् धर्मोऽत्र कर्तव्यश् चातुर्वर्ण्येन यत्नतः॥**—स्कन्दपुराण ४।४०।२७॥

**३ २०७३।९।२२ प्रातः ६:००**

| | | | | | |
|---|---|---|---|---|---|
| सू | ८:२१:३७:०८ | ६१:०७ | शु | १०:०८:३७:११ | ६२:१० |
| म | १०:१९:०४:०५ | ४५:१२ | श | ७:२७:४०:२६ | ६:३३ |
| बु | ८:०५:०२:३१ | -१३:१४ | रा | ४:११:४२:४२ | ३:११ |
| बृ | ५:२७:२४:०३ | ४:५५ | **९।२४–१५:१२ बुध मार्गी** | | |

१०
८श
मशुके
सू ९ बु
७
१२
६ बृ
१
३
५ रा
२
४

**वैदिकतिथिपत्रे कलिसंवत् ५०८२, सौम्यं युगम् (८५-९), परिवत्सरः (२) (चान्द्रः कीलकः संवत्सरः ४२), उदगयनम्, शिशिरः ऋतुः, तपस्यः [फाल्गुनः] मासः, कृष्णः पक्षः**

विक्रमसंवत् २०७३, शकान्तसंवत् (शकसंवत्) १९३८, बार्हस्पत्यः साधारणः संवत्सरः (४४), **धनुर्मास-मकरमासौ** (पुस-माघ), **माघकृष्णपक्षः** (नेपालसंवत् ११३७, पोहेलागाः=पौषकृष्णपक्षः) [जनबरि २०१७ क्रैस्ताब्दः]

| वै.ति. | करणम् | लौ.ति. | घण्टा | वै.न. | मुहूर्तः | घण्टा | लौ.न. | घण्टा | योगाः | घण्टा | योगाः | चन्द्रराशिः | दिनमा. | सू.उ. | सू.अ. | अहर्गणः | वारः | गते | ता. | २०७३ पुस २९ — माघ १४ |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| **प्रतिपदा** | बाल. | १ | १४:५७ | **पुन** | **१०।१२** | **१५:२५** | पु. | २४:०४ | वि. | १९:१६ | उत्पातः | कर्कटः | १०:३४ | ६:५६ | १७:२९ | २४ | **शु** | **२९** | 13 | **श्रौतिनां वैदिकानां पूर्णमासेष्टिः,** पौराणिकानामग्निव्रतम् □ मकरस्नानारम्भः |
| **द्वितीया** | तैति. | २ | १३:०८ | **पु** | **१०।१९** | **१५:४२** | अ. | २३:१२ | प्री. | १६:३९ | मानसम् | २३:१२ | १०:३४ | ६:५६ | १७:३० | २५ | **श** | **१** | 14 | **मकरमासप्रारम्भः (माघ) २०७३** (माघी), मकरे सूर्यः १४।२७(१२:४५) □ |
| **तृतीया** | वाणि. | ३ | ११:५९ | **अ** | **११।६** | **१५:५९** | म. | २३:०० | आ. | १४:३६ | मुद्गरः | सिंहः | १०:३५ | ६:५६ | १७:३१ | २६ | **आ** | **२** | 15 | |
| **चतुर्थी** | बवम् | ४ | ११:३६ | **म** | **११।१३** | **१६:१६** | पू. | २३:३५ | सौ. | १३:०८ | ध्वजः | २९:५१ | १०:३६ | ६:५६ | १७:३२ | २७ | **सो** | **३** | 16 | |
| **पञ्चमी** | कौल. | ५ | १२:०० | **पूफ** | **१२।०** | **१६:३३** | उ. | २४:५४ | शो. | १२:१७ | धाता | कन्या | १०:३७ | ६:५५ | १७:३३ | २८ | **म** | **४** | 17 | |
| **षष्ठी** | गराजिः | ६ | १३:०९ | **उफ** | **१२।८** | **१६:५०** | ह. | २६:५४ | अ. | १२:०० | आनन्दः | कन्या | १०:३८ | ६:५५ | १७:३३ | २९ | **बु** | **५** | 18 | |
| **सप्तमी** | विष्टिः | ७ | १४:५६ | **ह** | **१२।१५** | **१७:०८** | चि. | २९:२५ | सु. | १२:१२ | चरः | १६:०७ | १०:३९ | ६:५५ | १७:३४ | ३० | **बृ** | **६** | 19 | सायनकुम्भेसूर्यः ४१।९ (२३:४९) |
| **अष्टमी** | बाल. | ८ | १७:१२ | **चि** | **१३।२** | **१७:२५** | स्वा. | अहोरात्र | धृ. | १२:४६ | गदः | तुला | १०:४० | ६:५५ | १७:३५ | ३१ | **शु** | **७** | 20 | |
| **नवमी** | तैति. | ९ | १९:४३ | **स्वा** | **१३।९** | **१७:४२** | स्वा. | ८:१७ | शू. | १३:३३ | सिद्धिः | २८:३१ | १०:४१ | ६:५५ | १७:३६ | ३२ | **श** | **८** | 21 | |
| **दशमी** | वाणि. | १० | २२:१५ | **वि** | **१३।१७** | **१७:५९** | वि. | ११:१५ | ग. | १४:२४ | उत्पातः | वृश्चिकः | १०:४२ | ६:५४ | १७:३७ | ३३ | **आ** | **९** | 22 | |
| **एकादशी** | बवम् | ११ | २४:३७ | **अनु** | **१४।४** | **१८:१६** | अ. | १४:०८ | वृ. | १५:१० | मानसम् | वृश्चिकः | १०:४३ | ६:५४ | १७:३८ | ३४ | **सो** | **१०** | 23 | पौराणिकानां षट्तिला एकादशी |
| **द्वादशी** | कौल. | १२ | २६:३९ | **ज्ये** | **१४।११** | **१८:३३** | ज्ये. | १६:४६ | ध्रु. | १५:४२ | मुद्गरः | १६:४६ | १०:४५ | ६:५४ | १७:३८ | ३५ | **म** | **११** | 24 | |
| **त्रयोदशी** | गराजिः | १३ | २८:१३ | **मू** | **१४।१९** | **१८:५१** | मू. | १९:०० | व्या. | १५:५७ | ध्वजः | धनुः | १०:४६ | ६:५३ | १७:३९ | ३६ | **बु** | **१२** | 25 | |
| **चतुर्दशी** | विष्टिः | १४ | २९:१७ | **पूषा** | **१५।६** | **१९:०८** | पू. | २०:४५ | ह. | १५:५० | धाता | २७:०८ | १०:४७ | ६:५३ | १७:४० | ३७ | **बृ** | **१३** | 26 | ⊙ हल-कण्डनी-यन्त्रक-मन्थनीकर्म-सायम्भोजन-परिहारदिनम् |
| **अमावास्या** | चतुष्. | ३० | २९:५१ | **उषा** | **१५।१३** | **१९:२५** | उ. | २२:०२ | व. | १५:१९ | आनन्दः | मकरः | १०:४८ | ६:५३ | १७:४१ | ३८ | **शु** | **१४** | 27 | **श्रौतिनां वैदिकानां पिण्डपितृयज्ञः, स्मार्तानां वैदिकानां दर्शश्राद्धम्,** ⊙ |

**सौर अयन र वर्ष**

अरु पात्राहरुमा दिनमान लेख्ता पुस ७ गतेबाट दिनमान बढ्न थालेको कुरा लेख्तालेख्तै पनि उत्तरायणको आरम्भ मकरमास (माघ) १ गते लेख्ने गरेको कुरा अयथार्थ र अनुचित हो।

क्रैस्त ग्रेगोरियन पात्रोको जनबरि १ मा सौर नववर्ष मान्ने कुरा उत्तरायण लागेको १० दिन पछि परेकाले १० दिनले अशुद्ध छ।

**तपस्यकृष्णप्रतिपदायां गतकलिसावनाऽहर्गणः १८५५८३५, तपस्यकृष्णतृतीयायाम् उत्तराषाढासु सूर्यः १३।९ (१७:४३)। कृष्णपक्षे रात्रिकरणानि—**

प्र.—**कौलवम्**, द्वि.—**गराजिः**, तृ.—**विष्टिः**, च.—**बालवम्**, प.—**तैतिलम्**, ष.—**वाणिजम्**, स.—**बवम्**, अ.—**कौलवम्**, न.—**गराजिः**, द.—**विष्टिः**, ए.—**बालवम्**, द्वा.—**तैतिलम्**, त्रयो.—**वाणिजम्**, चतु.— **शकुनिः**, अमा.—**नागम्**। अमावास्यामा (औँसिमा) रात्रिभोजन नगर्ने र रुखबिरुवाका पात पनि चुँड्न नहुने तथा लुगा धुन नहुने भन्ने नियम :— **द्विर् भोजनममावस्यां न कर्तव्यं कदाचन। शर्वर्यां च विशेषेण माघफाल्गुनयोर् नरैः॥**—भविष्यपुराण २।२।८।१३७। **छिनत्ति वीरुधो यस् तु वीरुत्संस्थे निशाकरे। पत्रं वा पातयत्येकं ब्रह्महत्यां स विन्दति॥**-विष्णुपुराण २।१२।१०॥ ...**अमायां श्राद्धवासरे । वस्त्राणां क्षारसंयोगं करोति केवलं नरः। स याति क्षारकुण्डं च सूत्रमानाब्दमेव च। स व्रजेद् रजकीं योनिं सप्तजन्मसु भारते॥**—देवीभागवत ९।३३।६,७। सदाचारस्य मुख्यत्वम्—**सावित्रीमात्रसारोऽपि वरं विप्रः सुयन्त्रितः। नाऽयन्त्रितस् त्रिवेदोऽपि सर्वाशी सर्वविक्रयी।**—मनुस्मृति १।११८।

४ २०७३।१०।७ प्रातः ६:००

| | | | | | |
|---|---|---|---|---|---|
| **सू** | ९:०५:५७:४८ | ६१:०१ | **शु** | १०:२२:५४:१७ | ५५:२३ |
| **म** | १०:२९:४१:०९ | ४४:५५ | **श** | ७:२९:१५:२३ | ५:५६ |
| **बु** | ८:११:५२:१४ | ७१:२७ | **रा** | ४:११:०३:११ | ३:११ |
| **बृ** | ५:२८:३०:४४ | २:२९ | | | |

मशुके
बु ९
१२
१० सू
८ श
१
७
२
४
६ बृ
३
५ रा

## (८) चूडाकरणदिन

चूडाकरणको पुण्याहका विषयमा पारस्करगृह्यसूत्रमा विशेष वचन छैन तापनि अन्य शाखाका गृह्यसूत्रादिका र लघुस्मृति-पुराणका वचनबाट वैदिकहरुले सामान्यतया दैवकर्मका लागि विहित उदगयनका (उत्तरायणका) शिशिर-वसन्त-ग्रीष्म ऋतुका शुक्लपक्षका शुभतिथिहरु चूडाकरणका लागि पुण्याह हुने मानिएको देखिएकाले तेसैअनुसार चूडाकरणदिनको विवरण दिइएको छ। चूडाकरणका लागि राम्रा मानिएका तिथि– (द्वितीया), तृतीया, पञ्चमी, (षष्ठी), सप्तमी, दशमी, एकादशी, त्रयोदशी हुन् र चूडाकरणका लागि सामान्यतया राम्रा मानिएका नक्षत्र मृगशिरा, पुनर्वसु, पुष्य, हस्त, चित्रा, स्वाति, ज्येष्ठा, श्रवण, धनिष्ठा, शतभिषक्, रेवती, अश्विनी हुन्। आश्वलायनगृह्यसूत्रमा **"कल्याणे नक्षत्रे चौलकर्मोपनयनविवाहाः"** (१।४।१) भन्ने वचन छ। वैखानसगृह्यसूत्रमा **"उत्तरायणे पक्ष आपूर्यमाणे पुन्नाम्नि नक्षत्रे"** (३।२४) भन्ने वचन छ। **व्रतबन्धकै दिन चूडाकरण गर्दा छुट्टै विचार गरिँदैन, छुट्टै चूडाकरण गर्दा इ कुराको विचार गरिन्छ।** (वारको पनि विचार गर्नेहरुले आइत-मङ्गल-सन्सर(शनि)वारमा चूडाकरण नगर्नु भन्छन्। तेसमा ब्राह्मणका लागि आइतवार, क्षत्रियका लागि मङ्गलवार र वैश्य-शूद्रका लागि सन्सरवार ग्राह्य नै हुन्छन् पनि भन्छन्।) एस वर्षका चूडाकरणमा ग्राह्य पुण्याहको विवरण तल दिइन्छ–

उदगयने तपसि मासे शुक्ले पक्षे– पञ्चम्याम्, षष्ठ्याम्, सप्तम्याम्, दशम्याम्, एकादश्यां च तिथौ (**२०७३ मुङ्सिर १९, २०, २१, २४, २५)** चूडाकरणं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् पञ्चम्याः एकादश्याश्च (मुङ्सिर १९, २५) क्षत्रियग्राह्यत्वम्।*

उदगयने तपस्ये मासे शुक्ले पक्षे– पञ्चम्याम्, षष्ठ्याम्, दशम्यां च तिथौ **(२०७३ पुस १८, १९, २३)** चूडाकरणं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वाद् दशम्याः (पुस २३) क्षत्रियग्राह्यत्वम्।*

उदगयने मधौ मासे शुक्ले पक्षे– द्वितीयायाम्, तृतीयायाम्, षष्ठ्याम्, सप्तम्याम्, एकादश्याम्, त्रयोदश्यां च तिथौ **(२०७३ माघ १६, १७, २०, २१, २५, २७)** चूडाकरणं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् सप्तम्याः (माघ २१) क्षत्रियग्राह्यत्वम्।*

उदगयने माधवे मासे शुक्ले पक्षे– तृतीयायाम्, दशम्याम्, एकादश्यां च तिथौ **(२०७३ फागुन १८, २५, २६)** चूडाकरणं शुभम्।

उदगयने शुक्रे मासे शुक्ले पक्षे– द्वितीयायाम्, तृतीयायाम्, सप्तम्याम्, दशम्यां च तिथौ **(२०७३ चइत १६, १७, २१, २४)** चूडाकरणं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् तृतीयायाः (चइत १७) क्षत्रियग्राह्यत्वम्।*

उदगयने प्रथमशुचौ मासे शुक्ले पक्षे– षष्ठ्याम्, सप्तम्याम्, त्रयोदश्यां च तिथौ **(२०७४ वैशाख १९, २०, २६)** चूडाकरणं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् त्रयोदश्याः (वैशाख २६) क्षत्रियग्राह्यत्वम्।*

**२०७४ पुस ७, ९, माघ ४, ५, फागुन १३, १६, चइत ६, १०, १३ इ.।**

## (९) व्रतबन्धदिन (उपनयनदिन)

उपनयनको पुण्याहका विषयमा पारस्करगृह्यसूत्रमा विशेष वचन छैन तापनि वैदिकहरुले श्रौत अग्न्याधानकालनिर्देशको अनुकूल **"वसन्ते ब्राह्मणमुपनयीत, ग्रीष्मे राजन्यम्, शरदि वैश्यम्, वर्षासु रथकारमिति, सर्वानेव वा वसन्ते"** भन्ने बौधायनगृह्यसूत्रको वचन विचारमा राखि कर्म गर्नु उचित देखिएकाले र **"शिशिरे वा सर्वान्"** भन्ने पनि भारद्वाजगृह्यसूत्रको वचन भएकाले याँहाँ सामान्यतया दैवकर्मका लागि विहित उदगयनका (उत्तरायणका) शिशिर-वसन्त-ग्रीष्म ऋतुका शुक्लपक्षका शुभतिथिहरु व्रतबन्धका लागि पुण्याह हुने मानि व्रतबन्धदिनको विवरण दिइएको छ। उपनयनका लागि द्वितीया, तृतीया, पञ्चमी, (षष्ठी, सप्तमी), दशमी, एकादशी, द्वादशी, (त्रयोदशी) तिथि ग्राह्य मानिएका छन्। नैमित्तिक अनध्यायमा पनि व्रतबन्ध हुँदैन। व्रतबन्धका लागि सामान्यतया राम्रा मानिएका नक्षत्र रोहिणी, मृगशिरा, पुनर्वसु, पुष्य, हस्त, चित्रा, स्वाति, श्रवण, धनिष्ठा, शतभिषक्, रेवती हुन्। आश्वलायनगृह्यसूत्रमा **"कल्याणे नक्षत्रे चौलकर्मोपनयनविवाहाः"** (१।४।१) भन्ने वचन छ। भारद्वाजगृह्यसूत्रमा **"पुण्ये नक्षत्रे विशेषेण पुन्नामधेये"** (१।१) भन्ने वचन छ। पुन्नामधेय नक्षत्रमा पुनर्वसु, पुष्य, हस्त, शतभिषक्, पूर्वभद्रपद, उत्तरभद्रपद, अश्वयुक् गनिएका छन्। मुहूर्तचिन्तामणिको पीयूषधाराव्याख्यामा कृत्तिका, मघा, विशाखा, ज्येष्ठा र भरणी नक्षत्र उपनयनमा सर्वथा त्याज्य भनिएका छन्। (वारको पनि विचार गर्नेले मङ्लवारमा र सन्सरवारमा उपनयन नगर्नु भन्छन्। आइतवारमा र सउँवारमा पनि उपनयन नगर्नु जाति हो भन्छन्। सामवेदिका लागि र क्षत्रियका लागि

मङ्लवार पनि ग्राह्यै हो पनि भन्छन्। अस्ताएका वा पापग्रहयुक्त बुधको वार पनि शुभ हैन पनि भन्छन्।) एस वर्षका व्रतबन्धमा (उपनयनमा) ग्राह्य पुण्याहको विवरण तल दिइन्छ—

उदगयने तपसि मासे शुक्ले पक्षे— पञ्चम्याम्, षष्ठ्याम्, सप्तम्याम्, दशम्यां च तिथौ (**२०७३ मङ्सिर**[1] **१९, २०, २१, २४)** उपनयनं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् पञ्चम्याः (मङ्सिर १९) क्षत्रियग्राह्यत्वम्।*

उदगयने तपस्ये मासे शुक्ले पक्षे— पञ्चम्याम्, षष्ठ्याम्, त्रयोदश्यां च तिथौ **(२०७३ पुस १८, १९, २६)** उपनयनं शुभम्।

उदगयने मधौ मासे शुक्ले पक्षे— द्वितीयायाम्, तृतीयायाम्, षष्ठ्याम्, दशम्याम्, एकादश्याम्, त्रयोदश्यां च तिथौ **(२०७३ माघ १६, १७, २०, २४, २५, २७)** उपनयनं शुभम्।

उदगयने माधवे मासे शुक्ले पक्षे— तृतीयायाम्, सप्तम्याम्, दशम्याम्, एकादश्यां च तिथौ **(२०७३ फागुन १८, २२, २५, २६)** उपनयनं शुभम्।

उदगयने शुक्रे मासे शुक्ले पक्षे— षष्ठ्याम्, नवम्याम्, दशम्यां च तिथौ **(२०७३ चइत २०, २३, २४)** उपनयनं शुभम्।

उदगयने प्रथमशुचौ मासे शुक्ले पक्षे— तृतीयायाम्, षष्ठ्याम्, द्वादश्यां च तिथौ **(२०७४ वैशाख १६, १९, २५)** उपनयनं शुभम्।

**२०७४ पुस ८, ९, माघ ५, ९, १३, फागुन १३ (१०:३८ पर्यन्त), १५, १६ (११:३० पर्यन्त), चइत ५, ९, १३ इ.।**

## (१०) वेदारम्भदिन

उपनयन भएपछि वा समावर्तन पनि भएपछि पनि वर्षा ऋतुको पैलो पूर्णिमामा वेदारम्भ (अध्यायोपाकर्म) गर्ने विधान छ। पहिलो पटकको अध्यायोपाकर्म अथवा उपाकर्म नै वेदारम्भ हो। उपाकर्म गरिने **नभोमासको पूर्णिमा**मा एस वर्ष २०७४।३।२४ (शनिवार) परेको छ। एस दिन गर्न नसकिनेजस्तो भएमा **नभोमासका पञ्चमी**मा (२०७४।३।१४ बुधवार) उपाकर्म गर्न सकिन्छ।

एस दिन उपाकर्म गरेर यथाशक्ति आफ्नो शाखाको वेदको अध्ययन गरिसकेपछि अध्यायोत्सर्जन गर्ने दिन **सहस्यमासको रोहिणी नक्षत्र परेको दिन** २०७४।८।१८ सोमवार परेको छ। वैकल्पिक अध्यायोत्सर्जन गर्ने दिन अर्थात् **सहस्यकृष्णाष्टमी** २०७४।८।२५ सोमवार परेको छ।

## (११) अन्नप्राशनदिन (भातख्वाइ/पास्नि गर्ने दिन)

अन्नप्राशनको पुण्याहका विषयमा पारस्करगृह्यसूत्रमा विशेष वचन छैन तापनि वैदिकहरुले **"अथातः प्राशनकर्म, पूर्वपक्षे पुण्ये नक्षत्रे"** (जैमिनिगृह्यसूत्र १।१०) **"उदगयन-पूर्वपक्षा-हःपुण्याहेषु दैवानि स्मृतिरूपान्यार्थदर्शनात्। अहनि च कर्मसाकल्यम्"** (जैमिनीयधर्ममीमांसासूत्र ६।८।२३-२४) इत्यादि वचन विचारमा राखि कर्म गर्नु उचित देखिएकाले याँहाँ सामान्यतया दैवकर्मका लागि विहित शुक्लपक्षका शुभतिथिहरु अन्नप्राशनका लागि पुण्याह हुने मानि अन्नप्राशनदिनको विवरण दिइएको छ। अन्नप्राशनका लागि द्वितीया, तृतीया, पञ्चमी, सप्तमी, दशमी, त्रयोदशी तिथि ग्राह्य मानिएका छन्। अन्नप्राशनका लागि सामान्यतया राम्रा मानिएका नक्षत्र रोहिणी, मृगशिरा, पुनर्वसु, पुष्य, उत्तरफल्गुनी, हस्त, चित्रा, स्वाति, अनुराधा, उत्तराषाढा, श्रवण, धनिष्ठा, शतभिषक्, उत्तरभद्रपद, रेवती, अश्विनी हुन्। (वारको पनि विचार गर्नेले आइत-मङ्ल-सन्सरवार अन्नप्राशन नगर्नु भन्छन्। कसैले सउँवार र सुकवार पनि त्याज्य तथा आइतवार ग्राह्य पनि भनेका छन्।) एस वर्षका अन्नप्राशनमा ग्राह्य पुण्याहको विवरण तल दिइन्छ—

तपसि मासे शुक्ले पक्षे— पञ्चम्याम्, सप्तम्याम्, दशम्यां च तिथौ **(२०७३ मङ्सिर १९, २१, २४)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् पञ्चम्याः (मङ्सिर १९) क्षत्रियग्राह्यत्वम्।*

तपस्ये मासे शुक्ले पक्षे— तृतीयायाम्, पञ्चम्याम्, दशम्याम्, त्रयोदश्यां च तिथौ **(२०७३ पुस १६, १८, २३, २६)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वाद् दशम्याः (पुस २३) क्षत्रियग्राह्यत्वम्।*

मधौ मासे शुक्ले पक्षे— द्वितीयायाम्, तृतीयायाम्, पञ्चम्याम्, सप्तम्याम्, दशम्याम्, त्रयोदश्यां च तिथौ **(२०७३ माघ १६, १७, १९, २१, २४, २७)** अन्नप्राशनं शुभम्।

---

१. वेदाङ्गज्योतिषको गणनापद्धतिअनुसार २०७३ मङ्सिर १५ गते सौरचान्द्र **उत्तरायण लाग्ने** तथा वैदिक गणनाअनुसार **तपोमास (आर्तव माघमास) लाग्ने हुँदा** आजभोलि **मुङ्सिर भनिने** र आजभोलि **पुस भनिने** महिनामा पनि मूल वेदाङ्गशास्त्र वेदाङ्गज्योतिषअनुसार उपनयनदिन दिइएका हुन्।

माधवे मासे शुक्ले पक्षे– द्वितीयायाम्, तृतीयायाम्, सप्तम्याम्, दशम्यां च तिथौ **(२०७३ फागुन १७, १८, २२, २५)** अन्नप्राशनं शुभम्।

शुक्रे मासे शुक्ले पक्षे– द्वितीयायाम्, तृतीयायाम्, सप्तम्याम्, दशम्यां च तिथौ **(२०७३ चइत १६, १७, २१, २४)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् तृतीयायाः (चइत १७) क्षत्रियग्राह्यत्वम्।*

प्रथमशुचौ मासे शुक्ले पक्षे– तृतीयायाम्, सप्तम्याम्, त्रयोदश्यां च तिथौ **(२०७४ वैशाख १६, २०, २६)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् त्रयोदश्याः (वैशाख २६) क्षत्रियग्राह्यत्वम्।*

द्वितीयशुचौ मासे शुक्ले पक्षे– द्वितीयायाम्, पञ्चम्याम्, द्वादश्यां च तिथौ **(२०७४ जेठ १३, १६, २३)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्य क्रूरत्वाद् द्वादश्याः (जेठ २३) क्षत्रियग्राह्यत्वम्।*

नभसि मासे शुक्ले पक्षे– तृतीयायाम्, दशम्यां च तिथौ **(२०७४ असार १२, १९)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्य उग्रत्वाद् दशम्याः (असार १९) क्षत्रियग्राह्यत्वम्।*

नभस्ये मासे शुक्ले पक्षे– पञ्चम्याम्, सप्तम्याम्, दशम्यां च तिथौ **(२०७३ साउन १३, १५, १८)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् सप्तम्याः (साउन १५) क्षत्रियग्राह्यत्वम्।*

इषे मासे शुक्ले पक्षे– तृतीयायाम्, पञ्चम्याम्, त्रयोदश्यां च तिथौ **(२०७४ भदौ ८, १०, १८)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्य क्रूरत्वात् पञ्चम्याः (भदौ १०) क्षत्रियग्राह्यत्वम्।*

ऊर्जे मासे शुक्ले पक्षे– द्वितीयायाम्, तृतीयायाम्, पञ्चम्याम्, सप्तम्याम्, त्रयोदश्यां च तिथौ **(२०७४ असोज ५, ६, ८, १०, १६)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्य क्रूरत्वात् पञ्चम्याः (असोज ८) क्षत्रियग्राह्यत्वम्।*

सहसि मासे शुक्ले पक्षे– द्वितीयायाम्, दशम्याम्, त्रयोदश्यां च तिथौ **(२०७४ कात्तिक ४, १२, १५)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्य क्रूरत्वाद् द्वितीयायाः (कात्तिक ४) क्षत्रियग्राह्यत्वम्।*

सहस्ये मासे शुक्ले पक्षे– पञ्चम्याम्, सप्तम्याम्, त्रयोदश्यां च तिथौ **(२०७४ मङ्सिर ७, ९, १५)** अन्नप्राशनं शुभम्। *तत्र नक्षत्रस्योग्रत्वात् सप्तम्याः त्रयोदश्याश्च (मङ्सिर ९, १५) क्षत्रियग्राह्यत्वम्।*

**२०७४ पुस ७, ९, १२, माघ ४, ५, ९, फागुन ८, १३, १६, चइत ५, ६, १०, १३ इ.।**

## (१२) गृहारम्भ-गृहप्रवेशदिन

गृहारम्भका विषयमा पारस्करगृह्यसूत्रमा विशेष समय निश्चित गरिएको छैन। पुण्याहमा गृहारम्भ गर्ने कुरा त्याँहाँ छ। एसको कर्कोपाध्याय-जयराम इत्यादि व्याख्याताहरुले **"पुण्याहे शालां कारयेत्"** (३।४।१) भन्ने सूत्रका व्याख्यामा **"पुण्याहग्रहणमुदगयनाऽऽपूर्यमाणपक्षयोरनादरार्थम्" "पुनः पुण्याहग्रहणं तूदगयनशुक्लपक्षयोरनियमार्थम्"** इत्यादि भनि दक्षिणायनका र कृष्णपक्षका पनि पुण्याहमा गृहारम्भ हुने कुरा स्पष्ट पारेका छन्। अन्यत्र गृहारम्भका निम्ति उत्तरायणको आवश्यकता मानिएको छैन, फाल्गुन-वैशाखका साथै श्रावण, कार्त्तिक, मार्गशीर्ष, पौष मैनाहरुमा पनि गृहारम्भ हुने कुरा पाँइन्छ। वैदिकहरुले राम्रो तिथि-नक्षत्र पारेर गृहारम्भ गर्नु उचित छ। गृहारम्भमा ग्राह्य तिथिमा द्वितीया, तृतीया, पञ्चमी, षष्ठी, सप्तमी, दशमी, एकादशी, द्वादशी, त्रयोदशी र पूर्णिमा मानिएका छन्। गृहारम्भका निम्ति ग्राह्य नक्षत्रमा रोहिणी, मृगशीर्ष, पुष्य (तिष्य), उत्तरफल्गुनी, हस्त, चित्रा, स्वाति, अनुराधा, उत्तराषाढा, धनिष्ठा, शतभिषक्, उत्तरभद्रपद, रेवती मानिएका छन्। कसैले धनिष्ठापञ्चक-लाइ त्याज्य भनेका छन्। (वारको पनि विचार गर्नेले आइतवारलाइ र मङ्लवारलाइ गृहारम्भमा त्याज्य भनेका भञ्छन्। कसैले सन्सरवारलाइ पनि चोरभय गराउने भनि त्याज्य जस्तै मानेका छन्।)

**गृहप्रवेश**का विषयमा पारस्करगृह्यसूत्रमा पुण्याहमा गृहारम्भ गरेपछि जैले गृहनिर्माण सम्पन्न हुञ्छ तैले गृहप्रवेश गर्ने कुरा **"निष्ठितां प्रपद्यते"** (३।४।१८) भनेर प्रतिपादित गरिएको हुनाले जुनसुकै मैनामा पनि पुण्याहमा गृहप्रवेश गर्न हुञ्छ, अरु वास्तुशास्त्र-ज्योतिषादिले भनेका कुराको व्रास्ता नगरे पनि हुञ्छ, इच्छा लागे तिनको पनि विचार गरेर गृहप्रवेश गरे पनि हुञ्छ। तसर्थ पारस्करगृह्यसूत्रानुसार गृहप्रवेश गर्नका लागि वर्षभोरिका पुण्याह (राम्रो तिथि-नक्षत्र भएका दिन) ग्राह्य हुने देखिञ्छन्। गृहप्रवेशमा (प्रतिपदा), द्वितीया, तृतीया, पञ्चमी, षष्ठी, सप्तमी, अष्टमी, दशमी, एकादशी, द्वादशी, त्रयोदशी, पूर्णिमा तिथि ग्राह्य मानिएका छन्। ग्राह्य नक्षत्र रोहिणी, मृगशिरा, पुष्य, उत्तरफल्गुनी, हस्त, चित्रा, स्वाति, अनुराधा, उत्तराषाढा, धनिष्ठा, शतभिषक्, उत्तरभाद्र, रेवती नै मानिएका छन्। वारको पनि विचार गर्नेले सउँवार, बुधवार, बीवार, शुकवार (सन्सरवार) ग्राह्य मानेका छन्।

एस वर्षका गृहारम्भमा र गृहप्रवेशमा ग्राह्य पुण्याहहरुको सङ्क्षिप्त विवरण तल दिइञ्छ।

तपसि मासे शुक्ले पक्षे– षष्ठी (ध.), दशमी (रे.) पूर्णिमा **(२०७३ मङ्सिर २०, २४, २९)**।

तपसि मासे कृष्णे पक्षे– तृतीया, अष्टमी **(२०७३ पुस २, ७)**।

तपस्ये मासे शुक्ले पक्षे– तृतीया, पञ्चमी (धनि.), त्रयोदशी **(२०७३ पुस १६, १८, २६)।**

तपस्ये मासे कृष्णे पक्षे– द्वितीया, षष्ठी, सप्तमी, अष्टमी **(२०७३ माघ १, ५, ६, ७)**।

मधौ मासे शुक्ले पक्षे– द्वितीया (ध.), तृतीया (श.), पञ्चमी (उभ.), दशमी, एकादशी **(२०७३ माघ १६, १७, १९, २४, २५)**।

मधौ मासे कृष्णे पक्षे– तृतीया, पञ्चमी, षष्ठी, अष्टमी **(२०७३ फागुन ३, ५, ६, ८)**।

माधवे मासे शुक्ले पक्षे– द्वितीया (उ.भ.), तृतीया (रे.), सप्तमी, अष्टमी, एकादशी, पूर्णिमा **(२०७३ फागुन १७, १८, २२, २३, २६, ३०)**।

माधवे मासे कृष्णे पक्षे– द्वितीया, तृतीया **(२०७३ चइत २, ३)**।

शुक्रे मासे शुक्ले पक्षे– द्वितीया, षष्ठी, सप्तमी, दशमी, पूर्णिमा **(२०७३ चइत १६, २०, २१, २४, २९)**।

शुक्रे मासे कृष्णे पक्षे– द्वितीया, अष्टमी, दशमी **(२०७३ चइत ३१, २०७४ वैशाख ६, ८)**।

प्रथमशुचौ मासे शुक्ले पक्षे– तृतीया, सप्तमी, एकादशी, त्रयोदशी **(२०७४ वैशाख १६, २०, २४, २६)**।

प्रथमशुचौ मासे कृष्णे पक्षे– पञ्चमी, सप्तमी, अष्टमी, दशमी **(२०७४ जेठ २, ४, ५, ७)**।

नभसि मासे शुक्ले पक्षे– अष्टमी, दशमी, एकादशी, त्रयोदशी **(२०७४ असार १७, १९, २०, २२)**।

नभसि मासे कृष्णे पक्षे– द्वितीया, पञ्चमी, सप्तमी, अष्टमी **(२०७४ असार २६, २९, ३१, साउन १)**।

नभस्ये मासे शुक्ले पक्षे– पञ्चमी, षष्ठी, सप्तमी, अष्टमी, दशमी **(२०७४ साउन १३, १४, १५, १६, १८ )**।

नभस्ये मासे कृष्णे पक्षे– द्वितीया, पञ्चमी, दशमी **(२०७४ साउन २५, २८, भदौ १)**।

इषे मासे शुक्ले पक्षे– पञ्चमी, षष्ठी, सप्तमी, त्रयोदशी, पूर्णिमा **(२०७४ भदौ १०, ११, १२, १८, २०)**।

ऊर्जे मासे शुक्ले पक्षे– द्वितीया, तृतीया, पञ्चमी, सप्तमी, एकादशी, त्रयोदशी **(२०७४ असोज ५, ६, ८, १०, १४, १६)**।

ऊर्जे मासे कृष्णे पक्षे– द्वितीया, षष्ठी, सप्तमी, दशमी **(२०७४ असोज २०, २४, २५, २८)**।

सहसि मासे शुक्ले पक्षे– द्वितीया, अष्टमी, दशमी, एकादशी, त्रयोदशी **(२०७४ कात्तिक ४, १०, १२, १३, १५)**।

सहसि मासे कृष्णे पक्षे– तृतीया, सप्तमी **(२०७४ कात्तिक २०, २४)**।

सहस्ये मासे शुक्ले पक्षे– पञ्चमी, अष्टमी, एकादशी **(२०७४ मङ्सिर ७, १०, १३)**।

सहस्ये मासे कृष्णे पक्षे– द्वितीया (मृ. ११:१२ पर्यन्त), पञ्चमी (पु. १२:२० पर्यन्त), दशमी **(२०७४ मङ्सिर १९, २२, २७)**।

**२०७४ पुस** ८, ९, १२, १७, २०, २४, २५, २७ गते, **माघ** ५, ८, ९, १३, १४, १७, २२, २३, २४ **फागुन** ६ (८:३८ पश्चात्), १३ (१०:३८ पर्यन्त), १६ (११:३० पर्यन्त) २०, २१, २३, २५, **चइत** ५, ९, १०, १३, १८, २०, २६, २८ इ.।

## (१३) धान्यच्छेदनदिन (मुठि लिने दिन)

इषे मासे शुक्लपक्षे– त्रयोदशी **(२०७४ भदौ १८)**

इषे मासे कृष्णे पक्षे– द्वितीया, षष्ठी, द्वादशी, त्रयोदशी **(२०७४ भदौ २२, २६, असोज १, २)**

ऊर्जे मासे शुक्लपक्षे– द्वितीया, तृतीया, अष्टमी, दशमी, एकादशी, पूर्णिमा **(२०७४ असोज ५, ६, ११, १३, १४, १८)**

ऊर्जे मासे कृष्णपक्षे– पञ्चमी, सप्तमी, अष्टमी, दशमी **(२०७४ असोज २३, २५, २६, २८)**

सहसि मासे शुक्लपक्षे- द्वितीया, पञ्चमी, सप्तमी, दशमी, द्वादशी, त्रयोदशी **(२०७४ कात्तिक ४, ७, ९, १२, १४, १५)**।

सहसि मासे कृष्णे पक्षे– द्वितीया, पञ्चमी, सप्तमी, अष्टमी **(२०७४ कात्तिक १९, २२, २४, २५)**।

सहस्ये मासे शुक्ले पक्षे–द्वितीया, तृतीया, पञ्चमी, षष्ठी, दशमी, पूर्णिमा **(२०७४ मङ्सिर ४, ५, ७, ८, १२, १७)**।

सहस्ये मासे कृष्णे पक्षे– द्वितीया, पञ्चमी **(२०७४ मङ्सिर १९, २२)**।

मधौ मासे शुक्ले पक्षे– द्वितीया, पञ्चमी, अष्टमी, द्वादशी **(२०७४ माघ १६, १९, २२, २६)**।

माधवे मासे शुक्ले पक्षे– द्वितीया, पञ्चमी, अष्टमी, एकादशी **(२०७४ फागुन १७, २०, २३, २६)**।

## (१४) नवान्नप्राशनदिन (न्वाइ खाने दिन)

तपसि मासे शुक्ले पक्षे— पञ्चमी, दशमी **(२०७३ मङ्सिर १९, २४)।**
तपस्ये मासे शुक्ले पक्षे— पञ्चमी, दशमी, चतुर्दशी, पूर्णिमा **(२०७३ पुस १८, २३, २७, २८)।**
माधवे मासे शुक्ले पक्षे— द्वितीया, तृतीया, सप्तमी, एकादशी **(२०७३ फागुन १७, १८, २२, २६)।**
शुक्रे मासे शुक्ले पक्षे— द्वितीया, षष्ठी, दशमी **(२०७३ चइत १६, २०, २४)।**
सहसि मासे शुक्लपक्षे— द्वितीया, दशमी, चतुर्दशी, पूर्णिमा **(२०७४ कात्तिक ४, १२, १६, १७)।**
सहस्ये मासे शुक्ले पक्षे— सप्तमी, अष्टमी, द्वादशी **(२०७४ मङ्सिर ९, १०, १४)।**
**२०७४ पुस ७, ९, १२, फागुन ४, ८, १५, चइत ५, ६, १०, १३ इ.।**

[यो लौकिक-पौराणिक प्रयोगको कुरा हो, नएँ अन्न खाने श्रौतसूत्रोक्त आग्रयणेष्टि र गृह्यसूत्रोक्त नवान्नप्राशन भने पूर्णिमाका वा अम्सिका भोलिपल्ट मात्र हुञ्छन्।]

## (१५) वाणिज्यारम्भदिन (बेपार आरम्भ गर्ने / पसल खोल्ने दिन)

तपसि मासे शुक्लपक्षे— दशमी, एकादशी, पूर्णिमा **(२०७३ मङ्सिर २४, २५, २९)।**
तपस्ये मासे शुक्लपक्षे— पञ्चमी, सप्तमी, अष्टमी **(२०७३ पुस १८, २०, २१)।**
मधौ मासे शुक्लपक्षे— पञ्चमी, षष्ठी, सप्तमी, दशमी **(२०७३ माघ १९, २०, २१, २४)।**
माधवे मासे शुक्लपक्षे— तृतीया, सप्तमी, अष्टमी, एकादशी, पूर्णिमा **(२०७३ फागुन १८, २२, २३, २६, ३०)।**
शुक्रे मासे शुक्लपक्षे— द्वितीया, षष्ठी, सप्तमी, दशमी **(२०७३ चइत १६, २०, २१, २४)।**
प्रथमशुचौ मासे शुक्लपक्षे–तृतीया, सप्तमी, एकादशी, द्वादशी **(२०७४ वैशाख १६, २०, २४, २५)।**
नभसि मासे शुक्लपक्षे— अष्टमी, दशमी, त्रयोदशी **(२०७४ असार १७, १९, २२)।**
नभस्ये मासे शुक्लपक्षे— पञ्चमी, षष्ठी, सप्तमी, दशमी **(२०७४ साउन १३, १४, १५, १८)।**
इषे मासे शुक्लपक्षे— तृतीया, पञ्चमी **(२०७४ भदौ ८, १०)।**
ऊर्जे मासे शुक्लपक्षे— द्वितीया, तृतीया, एकादशी **(२०७४ असोज ५, ६, १४)।**
सहसि मासे शुक्लपक्षे— द्वितीया, अष्टमी, त्रयोदशी, पूर्णिमा **(२०७४ कात्तिक ४, १०, १५, १७)।**
सहस्ये मासे शुक्ले पक्षे— पञ्चमी, एकादशी, द्वादशी **(२०७४ मङ्सिर ७, १३, १४)।**
**२०७४ पुस १२, १३, १७ गते, माघ ८, १०, १३, १४, १७ फागुन ९, १३ चइत ५, ९, १८ इ.।**

## (१६) कर्णवेधदिन

कर्णवेध गर्दा जन्ममास, चतुर्मास, चैत्र, पौष महिना र जन्मनक्षत्र छोड्नु पर्ने मानिएको छ। मृगशीर्ष, पुनर्वसु, पुष्य, हस्त, चित्रा, अनुराधा, श्रवण, धनिष्ठा, रेवती, अश्विनी नक्षत्र ग्राह्य मानिएका छन्। छोराको दाहिने र छोरिको देउरे कान पहिला छेड्ने प्रचलन छ। जन्मेको बारौं अथवा सोरौं दिनमा कर्णवेध गर्नु पनि राम्रो मानिएको छ। (वारको पनि विचार गर्नेले सउँवार, बुधवार, बिहिवार, शुक्रवार ग्राह्य भनेका छन्।)

## (१७) अक्षरारम्भदिन

चूडाकर्म भएपछि अर्थात् तिन वर्ष पछि अक्षरारम्भ गराउने प्रचलन रहेको बुझिन्छ। आजभोलि ५ वर्षमा अक्षरारम्भ गराउने प्रसिद्धि छ। अक्षरारम्भ (लिपिशिक्षारम्भ) गर्नका निम्ति द्वितीया, तृतीया, पञ्चमी, षष्ठी, दशमी, एकादशी, द्वादशी तिथि ग्राह्य मानिएका छन्। नक्षत्रमा अश्लेषा, पुनर्वसु, पुष्य, हस्त, चित्रा, स्वाति, अनुराधा, श्रवण, रेवती, अश्विनी नक्षत्र ग्राह्य मानिएका छन्। (वारको पनि विचार गर्नेले सउँवार, बुधवार र बिहिवार ग्राह्य भनेका छन्।)

## (१८) विविध

**व्याकरणारम्भ—** प्रतिपदा-अष्टमी-त्रयोदशी-चतुर्दशी-अम्सि तिथिबाहेकका तिथि तथा रोहिणी, मृगशीर्ष, पुनर्वसु, पुष्य, हस्त, चित्रा, स्वाति, विशाखा, अश्विनी नक्षत्र (र बुधवार, बृहस्पतिवार, शुक्रवार) ग्राह्य छन्।

**गणितारम्भ—** रोहिणी, मृगशीर्ष, पुष्य, हस्त, अनुराधा, शतभिषक्, पूभ, रेवती (र बुधवार, बृहस्पतिवार, शुक्रवार) ग्राह्य छन्।

**कन्यावरण–** कृत्तिका, रोहिणी, मृगशीर्ष, मघा, पूफ, उफ, हस्त, स्वाति, अनुराधा, मूल, पूषा, उषा, श्रवण, धनिष्ठा, पूभ, उभ, रेवती नक्षत्र (र शुक्रवार) ग्राह्य छन्।

**क्षौरकर्म (कपालदारि बनाउने)–** मृगशीर्ष, पुनर्वसु, पुष्य, हस्त, चित्रा, स्वाति, ज्येष्ठा, श्रवण, धनिष्ठा, शतभिषक्, रेवती, अश्विनी (सोमवार, बुधवार, बिहिवार, शुक्रवार) ग्राह्य छन्।

**पशूनां गृहप्रवेशः–** चतुर्थी-नवमी-चतुर्दशी-अष्टमी-अमावास्या तिथि छोडेर रोहिणी, उफ, उषा, श्रवण, उभ इ नक्षत्र छोडेर (मङ्गलवार छोडेर) अन्य तिथि-नक्षत्र-(वार) पशु सार्न ग्राह्य छन्।

**पशु किनबेच–** प्रतिपदा-चतुर्थी-नवमी-चतुर्दशी-अष्टमी तिथि बाहेकका तिथि, पुनर्वसु, पुष्य, हस्त, विशाखा, ज्येष्ठा, धनिष्ठा, शतभिषक्, रेवती, अश्विनी नक्षत्र (र बिहिवार, शुक्रवार) ग्राह्य छन्।

**चुल्लीनिर्माण (चुलो बनाउने)–** रोहिणी, आर्द्रा, पुष्य, पूफ, उफ, पूषा, उषा, पूभ, उभ, अश्विनी नक्षत्र ग्राह्य छन्।

**द्रव्यप्रयोग–** मृगशीर्ष, पुनर्वसु, पुष्य, चित्रा, स्वाति, विशाखे, अनुराधा, श्रवण, धनिष्ठा, शतभिषक्, रेवती, अश्विनी नक्षत्र ग्राह्य छन्। (वारको पनि विचार गर्नेले बुधवार ऋण नदिने र आइतवार-मङ्गलवार नलिने गर्नु भञ्छन्)।

**गृहच्छादन (घर छाउने)–** द्वितीया, तृतीया, पञ्चमी, दशमी, एकादशी, त्रयोदशी तिथि तथा रोहिणी, मृगशीर्ष, पुष्य, हस्त, चित्रा, स्वाति, अनुराधा, श्रवण, धनिष्ठा, रेवती, अश्विनी नक्षत्र (र आइतवार-मङ्गलवारबाहेकका अरु वार) ग्राह्य छन्।

**औषध-सेवन–** मृगशीर्ष, पुनर्वसु, पुष्य, हस्त, चित्रा, स्वाति, अनुराधा, मूल, श्रवण, धनिष्ठा, शतभिषक्, रेवती, अश्विनी नक्षत्र (र आइत, सोम, बुध, बृहस्पति, शुक्र वार) ग्राह्य छन्।

**हल्सारो–** चतुर्थी-नवमी-चतुर्दशी-षष्ठीबाहेकका तिथि तथा रोहिणी, मृगशीर्ष, पुनर्वसु, पुष्य, उफ, हस्त, चित्रा, स्वाति, विशाखे, अनुराधा, मूल, उषा, श्रवण, धनिष्ठा, शतभिषक्, उभ, रेवती, अश्विनी नक्षत्र (र आइतवार-शनिवारबाहेकका अरु वार) ग्राह्य छन्।

**बीजवपन (बिउ छर्ने)–** चतुर्थी-नवमी-चतुर्दशी-षष्ठीबाहेकका तिथि तथा रोहिणी, मृगशीर्ष, पुष्य, उफ, हस्त, चित्रा, स्वाति, अनुराधा, मूल, उषा, धनिष्ठा, उभ, रेवती, अश्विनी नक्षत्र (र सोमवार, बुधवार, बिहिवार, शुक्रवार) ग्राह्य छन्।

**रोपाइँ–** कृत्तिका, रोहिणी, मृगशीर्ष, आर्द्रा, पुनर्वसु, पुष्य, अश्लेषा, मघा, पूफ, उफ, हस्त, चित्रा, स्वाति, विशाखे, अनुराधा, ज्येष्ठा, मूल, पूषा, उषा, श्रवण, धनिष्ठा, शतभिषक्, पूभ, उभ, रेवती, अश्विनी, भरणी नक्षत्र (र मङ्गलवार-शनिवारबाहेकका अरु वार) ग्राह्य छन्।

**दाइँ–** रोहिणी, मृगशीर्ष, आर्द्रा, पुनर्वसु, पुष्य, अश्लेषा, मघा, पूफ, उफ, हस्त, चित्रा, स्वाति, विशाखे, अनुराधा, ज्येष्ठा, मूल, पूषा, उषा, श्रवण, धनिष्ठा, शतभिषक्, पूभ, उभ, रेवती नक्षत्र ग्राह्य छन्।

**भकारि भर्ने–** कृत्तिका, रोहिणी, मृगशीर्ष, आर्द्रा, पुनर्वसु, पुष्य, अश्लेषा, मघा, पूफ, उफ, हस्त, चित्रा, स्वाति, विशाखे, अनुराधा, ज्येष्ठा, मूल, पूषा, उषा, श्रवण, धनिष्ठा, शतभिषक्, पूभ, उभ, रेवती, अश्विनी नक्षत्र (र सोमवार, बुधवार, बिहिवार, शुक्रवार) ग्राह्य छन्।

**काठको खलियो लाउने–** कृत्तिका, रोहिणी, मृगशीर्ष, आर्द्रा, पुनर्वसु, पुष्य, अश्लेषा, मघा, पूफ, उफ, हस्त, चित्रा, स्वाति, विशाखे, अनुराधा, ज्येष्ठा, मूल, पूषा, उषा, श्रवण नक्षत्र (र आइतवार, सोमवार, मङ्गलवार, बुधवार, शुक्रवार) ग्राह्य छन्।

**विशेष– मूल वैदिक परम्परामा मेषादि-लग्नविचारको आवश्यकता पर्दैन। दैव कर्मका निम्ति पूर्वाह्णलाइ उत्तम मानिएको छ। विविध कर्मका निम्ति आथर्वण ज्योतिष्ले बताएका मुहूर्तको विचार गरेर समयनिर्धारण गर्नु उचित हुञ्छ। तिनको विवरण एसै तिथिपत्रमा पछाडि दिइएको छ** (पृ.८१)।

## (१९) काठमाण्डपनगरस्य प्रथमलग्नसारणी (काठमाण्डु २७° ४२')

| अंशाः | ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १३ | १४ | १५ | १६ | १७ | १८ | १९ | २० | २१ | २२ | २३ | २४ | २५ | २६ | २७ | २८ | २९ |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| मेषः | २ | २ | ३ | ३ | ३ | ३ | ३ | ३ | ३ | ३ | ४ | ४ | ४ | ४ | ४ | ४ | ४ | ५ | ५ | ५ | ५ | ५ | ५ | ५ | ६ | ६ | ६ | ६ | ६ | ६ |
| १ | ५१ | ५८ | ५ | १४ | २० | २८ | ३६ | ४३ | ५१ | ५९ | ६ | १४ | २३ | ३० | ३८ | ४६ | ५४ | २ | १० | १९ | २६ | ३५ | ४३ | ५१ | ० | ८ | १७ | २६ | ३४ | ४३ |
| वृषः | ६ | ७ | ७ | ७ | ७ | ७ | ७ | ७ | ८ | ८ | ८ | ८ | ८ | ८ | ९ | ९ | ९ | ९ | ९ | ९ | ९ | १० | १० | १० | १० | १० | ११ | ११ | ११ | ११ |
| २ | ५२ | १ | ९ | १८ | २७ | ३६ | ४५ | ५५ | ३ | १३ | २२ | ३१ | ४१ | ५० | १ | १० | १९ | २९ | ३९ | ४९ | ५९ | ९ | १८ | ३० | ४० | ५० | १ | ११ | २१ | ३२ |
| मिथुनम् | ११ | ११ | १२ | १२ | १२ | १२ | १२ | १२ | १३ | १३ | १३ | १३ | १३ | १४ | १४ | १४ | १४ | १४ | १५ | १५ | १५ | १५ | १५ | १५ | १६ | १६ | १६ | १६ | १६ | १७ |
| ३ | ४३ | ५३ | ३ | १५ | २५ | ३६ | ४६ | ५८ | ९ | २० | ३१ | ४२ | ५३ | ४ | १६ | २७ | ३८ | ४९ | १ | १२ | २४ | ३५ | ४७ | ५९ | १० | २१ | ३३ | ४४ | ५६ | ८ |
| कर्कटः | १७ | १७ | १७ | १७ | १८ | १८ | १८ | १८ | १८ | १९ | १९ | १९ | १९ | १९ | २० | २० | २० | २० | २० | २१ | २१ | २१ | २१ | २१ | २१ | २२ | २२ | २२ | २२ | २२ |
| ४ | १९ | ३१ | ४३ | ५४ | ६ | १७ | २९ | ४२ | ५३ | ५ | १६ | २८ | ४० | ५१ | ४ | १५ | २७ | ३८ | ५० | २ | १४ | २५ | ३७ | ४८ | ६० | १२ | २३ | ३५ | ४६ | ५८ |
| सिंहः | २३ | २३ | २३ | २३ | २३ | २४ | २४ | २४ | २४ | २४ | २५ | २५ | २५ | २५ | २५ | २६ | २६ | २६ | २६ | २६ | २६ | २७ | २७ | २७ | २७ | २७ | २८ | २८ | २८ | २८ |
| ५ | १० | २१ | ३३ | ४४ | ५६ | ७ | १९ | ३१ | ४२ | ५३ | ५ | १६ | २७ | ३९ | ५१ | २ | १३ | २४ | ३६ | ४७ | ५९ | १० | २१ | ३३ | ४४ | ५५ | ६ | १८ | २८ | ४१ |
| कन्या | २८ | २९ | २९ | २९ | २९ | २९ | २९ | ३० | ३० | ३० | ३० | ३० | ३१ | ३१ | ३१ | ३१ | ३१ | ३२ | ३२ | ३२ | ३२ | ३२ | ३३ | ३३ | ३३ | ३३ | ३३ | ३३ | ३४ | ३४ |
| ६ | ५१ | ३ | १४ | २६ | ३७ | ४८ | ५९ | १० | २२ | ३३ | ४४ | ५६ | ७ | १८ | २९ | ४१ | ५२ | ३ | १४ | २६ | ३७ | ४९ | ० | ११ | २३ | ३४ | ४५ | ५७ | ८ | २० |
| तुला | ३४ | ३४ | ३४ | ३५ | ३५ | ३५ | ३५ | ३५ | ३६ | ३६ | ३६ | ३६ | ३६ | ३७ | ३७ | ३७ | ३७ | ३७ | ३७ | ३८ | ३८ | ३८ | ३८ | ३८ | ३९ | ३९ | ३९ | ३९ | ३९ | ४० |
| ७ | ३२ | ४२ | ५४ | ४ | १६ | २८ | ३९ | ५१ | ३ | १४ | २५ | ३७ | ४८ | १ | १२ | २३ | ३५ | ४६ | ५८ | ९ | २२ | ३३ | ४४ | ५६ | ८ | २० | ३१ | ४३ | ५५ | ७ |
| वृश्चिकः | ४० | ४० | ४० | ४० | ४१ | ४१ | ४१ | ४१ | ४१ | ४२ | ४२ | ४२ | ४२ | ४२ | ४३ | ४३ | ४३ | ४३ | ४३ | ४३ | ४४ | ४४ | ४४ | ४४ | ४४ | ४५ | ४५ | ४५ | ४५ | ४५ |
| ८ | १८ | २९ | ४१ | ५३ | ५ | १७ | २८ | ४० | ५१ | ३ | १५ | २६ | ३८ | ५० | २ | १३ | २४ | ३६ | ४८ | ५९ | ११ | २२ | ३३ | ४५ | ५६ | ८ | १९ | ३० | ४२ | ५३ |
| धनुः | ४६ | ४६ | ४६ | ४६ | ४६ | ४६ | ४७ | ४७ | ४७ | ४७ | ४७ | ४८ | ४८ | ४८ | ४८ | ४८ | ४८ | ४९ | ४९ | ४९ | ४९ | ४९ | ४९ | ५० | ५० | ५० | ५० | ५० | ५० | ५१ |
| ९ | ४ | १५ | २६ | ३७ | ४८ | ५९ | १० | २१ | ३१ | ४३ | ५३ | ४ | १४ | २५ | ३६ | ४६ | ५६ | ७ | १७ | २७ | ३७ | ४७ | ५७ | ७ | १७ | २७ | ३६ | ४६ | ५६ | ६ |
| मकरः | ५१ | ५१ | ५१ | ५१ | ५१ | ५२ | ५२ | ५२ | ५२ | ५२ | ५२ | ५२ | ५३ | ५३ | ५३ | ५३ | ५३ | ५३ | ५३ | ५४ | ५४ | ५४ | ५४ | ५४ | ५४ | ५४ | ५५ | ५५ | ५५ | ५५ |
| १० | १५ | २४ | ३४ | ४३ | ५३ | २ | ११ | २० | २९ | ३७ | ४७ | ५६ | ५ | १३ | २२ | ३१ | ३९ | ४७ | ५६ | ५ | १३ | २१ | २९ | ३७ | ४६ | ५४ | २ | १० | १८ | २६ |
| कुम्भः | ५५ | ५५ | ५५ | ५५ | ५६ | ५६ | ५६ | ५६ | ५६ | ५६ | ५६ | ५६ | ५७ | ५७ | ५७ | ५७ | ५७ | ५७ | ५७ | ५७ | ५८ | ५८ | ५८ | ५८ | ५८ | ५८ | ५८ | ५८ | ५९ | ५९ |
| ११ | ३३ | ४२ | ५० | ५७ | ५ | १२ | २० | २७ | ३५ | ४३ | ५१ | ५८ | ५ | १२ | २० | २७ | ३४ | ४२ | ५० | ५६ | ३ | ११ | १८ | २५ | ३३ | ३९ | ४७ | ५४ | १ | ९ |
| मीनः | ५९ | ५९ | ५९ | ५९ | ५९ | ५९ | ५९ | ० | ० | ० | ० | ० | ० | ० | ० | १ | १ | १ | १ | १ | १ | १ | १ | १ | २ | २ | २ | २ | २ | २ |
| १२ | १५ | २२ | ३० | ३६ | ४३ | ५१ | ५८ | ५ | १३ | १९ | २६ | ३४ | ४० | ४७ | ५५ | २ | ९ | १६ | २३ | ३१ | ३७ | ४५ | ५२ | ५९ | ७ | १४ | २१ | २९ | ३६ | ४४ |
| अंशाः | ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १३ | १४ | १५ | १६ | १७ | १८ | १९ | २० | २१ | २२ | २३ | २४ | २५ | २६ | २७ | २८ | २९ |

## (२०) लग्नषड्वर्गशुद्धिविचारः

**एकविंशे तु मेषस्य वृषस्य तु चतुर्दशे।**
**मिथुनस्य सप्तदशे सप्तमे कर्कटस्य च॥**

**अष्टादशेऽंशे सिंहस्य कन्यायाः सप्तमे तथा।**
**चतुर्विंशे तुलायाश्च द्वादशे वृश्चिकस्य च॥**

**धनुषः स्यात् सप्तदशे मकरस्य चतुर्दशे।**
**षड्विंशेऽशे तु कुम्भस्य शुद्धिर् मीनस्य सप्तमे॥**

**अर्थ–** मेषको एक्काइसौँ, वृषको चौधौँ, मिथुनको सत्रौँ, कर्कटको सातौँ, सिंहको अठारौँ, कन्याको सातौँ, तुलाको चौबिसौँ, वृश्चिकको बारौँ, धनुको सत्रौँ, मकरको चौधौँ, कुम्भको छब्बिसौँ र मीनको सातौँ अंशमा षड्वर्गशुद्धि हुन्छ।

[लग्नको विचार गर्न चाहानेहरुलाइ सुविधा पुऱ्याउन याँहाँ प्रथम लग्नसारणी दिय्येको हो। मूल वैदिक परम्परामा लग्नविचारको आवश्यकता पर्दैन। वैदिक मुहूर्तहरुको विचार गरेर कर्म गर्न उचित हुञ्छ। वैदिक मुहूर्तहरुको विवरण एसै तिथिपत्रमा पछाडि दिइएको छ (पृ.८१)]

## (२१) सार्वत्रिक दशमलग्नसारणी

| अंशाः | ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १३ | १४ | १५ | १६ | १७ | १८ | १९ | २० | २१ | २२ | २३ | २४ | २५ | २६ | २७ | २८ | २९ |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| मेषः | ३ | ३ | ४ | ४ | ४ | ४ | ४ | ४ | ५ | ५ | ५ | ५ | ५ | ५ | ६ | ६ | ६ | ६ | ६ | ६ | ७ | ७ | ७ | ७ | ७ | ७ | ७ | ८ | ८ | ८ |
| १ | ४७ | ५६ | ५ | १४ | २४ | ३३ | ४३ | ५२ | २ | ११ | २२ | ३२ | ४१ | ५० | ० | १० | २० | २९ | ३९ | ४९ | ० | १० | १९ | २९ | ३९ | ४९ | ५९ | ९ | २० | ३० |
| वृषः | ८ | ८ | ९ | ९ | ९ | ९ | ९ | ९ | १० | १० | १० | १० | १० | १० | ११ | ११ | ११ | ११ | ११ | १२ | १२ | १२ | १२ | १२ | १२ | १३ | १३ | १३ | १३ | १३ |
| २ | ४० | ५१ | १ | ११ | २१ | ३२ | ४२ | ५३ | ३ | १३ | २५ | ३५ | ४५ | ५६ | ६ | १७ | २८ | ३८ | ४९ | ० | ११ | २१ | ३२ | ४३ | ५४ | ४ | १५ | २६ | ३७ | ४८ |
| मिथुनम् | १३ | १४ | १४ | १४ | १४ | १४ | १५ | १५ | १५ | १५ | १५ | १५ | १६ | १६ | १६ | १६ | १६ | १७ | १७ | १७ | १७ | १७ | १७ | १८ | १८ | १८ | १८ | १८ | १९ | १९ |
| ३ | ५९ | १० | २१ | ३१ | ४२ | ५३ | ४ | १५ | २६ | ३७ | ४८ | ५९ | १० | २१ | ३१ | ४२ | ५३ | ४ | १५ | २६ | ३६ | ४७ | ५८ | ८ | १९ | ३० | ४० | ५१ | २ | १२ |
| कर्कटः | १९ | १९ | १९ | १९ | २० | २० | २० | २० | २० | २० | २१ | २१ | २१ | २१ | २१ | २१ | २२ | २२ | २२ | २२ | २२ | २२ | २३ | २३ | २३ | २३ | २३ | २३ | २४ | २४ |
| ४ | २३ | ३३ | ४४ | ५४ | ५ | १५ | २६ | ३६ | ४६ | ५७ | ७ | १७ | २८ | ३८ | ४८ | ५८ | ८ | १८ | २८ | ३८ | ४८ | ५८ | ८ | १८ | २८ | ३८ | ४८ | ५८ | ७ | १७ |
| सिंहः | २४ | २४ | २४ | २४ | २५ | २५ | २५ | २५ | २५ | २५ | २६ | २६ | २६ | २६ | २६ | २६ | २६ | २७ | २७ | २७ | २७ | २७ | २७ | २८ | २८ | २८ | २८ | २८ | २८ | २८ |
| ५ | २७ | ३६ | ४६ | ५६ | ५ | १५ | २४ | ३४ | ४४ | ५३ | ३ | १२ | २१ | ३१ | ४० | ५० | ५९ | ८ | १८ | २७ | ३६ | ४६ | ५५ | ४ | १३ | २२ | ३२ | ४१ | ५० | ५९ |
| कन्या | २९ | २९ | २९ | २९ | २९ | २९ | ३० | ३० | ३० | ३० | ३० | ३० | ३० | ३१ | ३१ | ३१ | ३१ | ३१ | ३१ | ३२ | ३२ | ३२ | ३२ | ३२ | ३२ | ३३ | ३३ | ३३ | ३३ | ३३ |
| ६ | ९ | १८ | २७ | ३६ | ४५ | ५४ | ३ | १३ | २२ | ३१ | ४१ | ४९ | ५९ | ९ | १८ | २६ | ३५ | ४५ | ५४ | ३ | १३ | २२ | ३१ | ४१ | ५१ | ० | ९ | १८ | २८ | ३७ |
| तुला | ३३ | ३३ | ३४ | ३४ | ३४ | ३४ | ३४ | ३४ | ३५ | ३५ | ३५ | ३५ | ३५ | ३५ | ३६ | ३६ | ३६ | ३६ | ३६ | ३६ | ३६ | ३७ | ३७ | ३७ | ३७ | ३७ | ३७ | ३८ | ३८ | ३८ |
| ७ | ४७ | ५६ | ५ | १४ | २४ | ३३ | ४३ | ५३ | २ | १२ | २२ | ३१ | ४१ | ५१ | ० | १० | २० | ३० | ३९ | ४९ | ५९ | ९ | १९ | २९ | ३९ | ४९ | ५९ | ९ | २० | ३० |
| वृश्चिकः | ३८ | ३८ | ३९ | ३९ | ३९ | ३९ | ३९ | ३९ | ४० | ४० | ४० | ४० | ४० | ४० | ४१ | ४१ | ४१ | ४१ | ४१ | ४२ | ४२ | ४२ | ४२ | ४२ | ४२ | ४३ | ४३ | ४३ | ४३ | ४३ |
| ८ | ४० | ५० | १ | ११ | २१ | ३२ | ४२ | ५३ | ३ | १४ | २४ | ३५ | ४५ | ५६ | ७ | १७ | २८ | ३८ | ४९ | ० | १० | २१ | ३२ | ४३ | ५४ | ४ | १५ | २६ | ३७ | ४८ |
| धनुः | ४३ | ४४ | ४४ | ४४ | ४४ | ४४ | ४५ | ४५ | ४५ | ४५ | ४५ | ४५ | ४६ | ४६ | ४६ | ४६ | ४६ | ४७ | ४७ | ४७ | ४७ | ४७ | ४७ | ४८ | ४८ | ४८ | ४८ | ४८ | ४९ | ४९ |
| ९ | ५९ | १० | २१ | ३१ | ४२ | ५३ | ४ | १५ | २६ | ३७ | ४८ | ५९ | १० | २० | ३१ | ४२ | ५३ | ४ | १५ | २५ | ३६ | ४७ | ५८ | ८ | १९ | ३० | ४० | ५१ | २ | १२ |
| मकरः | ४९ | ४९ | ४९ | ४९ | ५० | ५० | ५० | ५० | ५० | ५० | ५१ | ५१ | ५१ | ५१ | ५१ | ५१ | ५२ | ५२ | ५२ | ५२ | ५२ | ५२ | ५३ | ५३ | ५३ | ५३ | ५३ | ५३ | ५४ | ५४ |
| १० | २३ | ३३ | ४४ | ५४ | ५ | १५ | २६ | ३६ | ४६ | ५७ | ७ | १७ | २८ | ३८ | ४८ | ५८ | ८ | १८ | २८ | ३८ | ४८ | ५८ | ८ | १८ | २८ | ३८ | ४८ | ५८ | ७ | १७ |
| कुम्भः | ५४ | ५४ | ५४ | ५४ | ५५ | ५५ | ५५ | ५५ | ५५ | ५५ | ५६ | ५६ | ५६ | ५६ | ५६ | ५६ | ५६ | ५७ | ५७ | ५७ | ५७ | ५७ | ५७ | ५८ | ५८ | ५८ | ५८ | ५८ | ५८ | ५८ |
| ११ | २७ | ३६ | ४६ | ५६ | ५ | १५ | २४ | ३४ | ४४ | ५३ | ३ | १२ | २१ | ३१ | ४० | ५० | ५९ | ९ | १८ | २८ | ३७ | ४६ | ५५ | ५ | १४ | २३ | ३२ | ४१ | ५० | ५९ |
| मीनः | ५९ | ५९ | ५९ | ५९ | ५९ | ५९ | ० | ० | ० | ० | ० | ० | ० | १ | १ | १ | १ | १ | १ | २ | २ | २ | २ | २ | २ | २ | ३ | ३ | ३ | ३ |
| १२ | ९ | १८ | २७ | ३६ | ४५ | ५४ | ३ | १३ | २२ | ३१ | ४० | ४९ | ५९ | ८ | १७ | २६ | ३५ | ४५ | ५४ | ४ | १३ | २२ | ३१ | ४० | ५० | ५९ | ९ | १८ | २८ | ३७ |
| अंशाः | ० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १३ | १४ | १५ | १६ | १७ | १८ | १९ | २० | २१ | २२ | २३ | २४ | २५ | २६ | २७ | २८ | २९ |

## (२२) अवकहडचक्र (वर-वधूमेलापकसारणीसहित)

| चरणगत नामाद्याक्षर | नक्षत्र राशि | राशि-स्वामी | वर्ण | वश्य | योनि | वैरि-योनि | गण | नाडी | आसन |
|---|---|---|---|---|---|---|---|---|---|
| चूचेचोला | अश्विनी मेष | मङ्गल | क्षत्रि | चतुष्पद | अश्व | महिष | देव | आद्य | अश्व |
| लीलूलेलो | भरणी मेष | मङ्गल | क्षत्रि | चतुष्पद | गज | सिंह | नर | मध्य | प्रेत |
| अइउए | कृ.१ मेष<br>कृ.३ वृष | मङ्गल १<br>शुक्र ३ | क्षत्रि १<br>वैश्य ३ | चतुष्पद | अज | वानर | राक्षस | अन्त्य | अग्निकुण्ड |
| ओवावीवू | रोहिणी वृष | शुक्र | वैश्य | चतुष्पद | सर्प | नकुल | नर | अन्त्य | गौ |
| वेवोकाकी | मृग.२ वृष<br>मृग.२ मिथुन | शुक्र २<br>बुध २ | वैश्य २<br>शूद्र २ | चतु २<br>द्विपद २ | सर्प | नकुल | देव | मध्य | मृग |
| कुघङछ | आर्द्रा मिथुन | बुध | शूद्र | द्विपद | श्वान | मृग | नर | आद्य | सर्प |
| केकोहाही | पुन.३ मिथुन<br>पुन.१ कर्कट | बुध ३<br>चन्द्र १ | शूद्र ३<br>ब्राह्मण १ | द्विपद ३<br>जल १ | मार्जार | मूषक | देव | आद्य | कमल |
| हुहेहोडा | तिष्य कर्कट | चन्द्र | ब्राह्मण | जल | मेष | वानर | देव | मध्य | कलश |
| डिडुडेडो | अश्ले. कर्कट | चन्द्र | ब्राह्मण | जल | मार्जार | मूषक | राक्षस | अन्त्य | काक |
| मामिमूमे | मघा सिंह | सूर्य | क्षत्रि | चतुष्पद | मूषक | मार्जार | राक्षस | अन्त्य | महिष |
| मोटाटीटु | पूफ सिंह | सूर्य | क्षत्रि | चतुष्पद | मूषक | मार्जार | नर | मध्य | शिला |
| टेटोपपी | उफ.१ सिंह<br>उफ.३ कन्या | सूर्य १<br>बुध ३ | क्षत्रि १<br>वैश्य ३ | चतु १<br>द्विपद ३ | गौ | व्याघ्र | नर | आद्य | शिला |
| पुषणठ | हस्त कन्या | बुध | वैश्य | द्विपद | महिष | अश्व | देव | आद्य | गज |
| पेपोररी | चित्रा २ कन्या<br>चित्रा २ तुला | बुध २<br>शुक्र २ | वैश्य २<br>शूद्र २ | द्विपद | व्याघ्र | गौ | राक्षस | मध्य | मयूर |
| रूरेरोता | स्वाति तुला | शुक्र | शूद्र | द्विपद | महिष | अश्व | देव | अन्त्य | दोला |
| तीतूतेतो | विशा.३ तुला<br>विशा.१ वृश्चि. | शुक्र ३<br>मङ्गल १ | शूद्र ३<br>ब्राह्मण १ | द्विपद ३<br>कीट १ | व्याघ्र | गौ | राक्षस | अन्त्य | अज |
| नानीनूने | अनुराधा वृश्चि. | मङ्गल | ब्राह्मण | कीट | मृग | श्वान | देव | मध्य | हंस |
| नोयायियु | ज्येष्ठा वृश्चि. | मङ्गल | ब्राह्मण | कीट | मृग | श्वान | राक्षस | आद्य | कच्छप |
| येयोभाभी | मूल.धनु | गुरु | क्षत्रि | मनुष्य | श्वान | मृग | राक्षस | आद्य | मूल |
| भूधफाढ | पूषा धनु | गुरु | क्षत्रि | मनुष्य | वानर | अज | नर | मध्य | शयन |
| भेभोजाजी | उषा.१ धनु<br>उषा.३ मकर | गुरु १<br>शनि ३ | क्षत्रि १<br>वैश्य ३ | मनुष्य १<br>चतुष्पद ३ | नकुल | सर्प | नर | अन्त्य | शयन |
| खीखूखेखो | श्रवण मकर | शनि | वैश्य | चतुष्पद | वानर | अज | देव | अन्त्य | नर |
| गागीगूगे | धनि.२ मकर<br>धनि.२ कुम्भ | शनि | वैश्य २<br>शूद्र २ | चतुष्पद २<br>द्विपद २ | सिंह | गज | राक्षस | मध्य | आढक |
| गोसासीसु | शतभि. कुम्भ | शनि | शूद्र | द्विपद | अश्व | महिष | राक्षस | आद्य | वृष |
| सेसोददी | पूभद्र.३ कुम्भ<br>पूभद्र.१ मीन | शनि ३<br>गुरु १ | शूद्र ३<br>ब्राह्मण १ | द्विपद ३<br>जल १ | सिंह | गज | नर | आद्य | भद्रपीठ |
| दूथझञ | उभद्र. मीन | गुरु | ब्राह्मण | जल | गौ | व्याघ्र | नर | मध्य | भद्रपीठ |
| देदोचाची | रेवती मीन | गुरु | ब्राह्मण | जल | गज | सिंह | देव | अन्त्य | चक्र |

(**जुजेजोखा** अभिजित् मकरराशि)

**रोहिण्यार्द्रा-मृगेन्द्राग्नि-पुष्य-श्रवण-पौष्णभम्। अहिर्बुध्न्यर्क्षमेतेषां नाडीदोषो न विद्यते॥**

(नाडीदोष नलाग्ने नक्षत्र– रोहिणी, मृगशीर्ष, आर्द्रा, पुष्य, विशाखा, श्रवण, उत्तरभद्रपद र रेवती)

[अवकहडचक्रादिको विषय पनि मूल वेद-वेदाङ्गग्रन्थमा छैन। तसर्थ वैदिकहरुले **"मम व्रते ते हृदयं दधामि मम चित्तमनु चित्तं ते अस्तु। मम वाचमेकमना जुषस्व प्रजापतिष्ट्वा नियुनक्तु मह्यम्" (पारस्करगृह्यसूत्र १।८।८)** भन्ने वरको प्रार्थनाको अनुकूल हृदय भएकि कन्या बिया गरे सर्वार्थसिद्धि हुञ्छ। गुणको वास्ता गर्नपर्दैन। इच्छा लागे गुणको विचार गरे पनि हुञ्छ।]

# (२३) वरवधूयोगगुणबोधकसारणी

| वरको राशि / वधूको राशि | नक्षत्र | मेष | | | वृष | | | मिथुन | | | कर्कट | | | सिंह | | | कन्या | | | तुला | | | वृश्चिक | | | धनु | | | | मकर | | | | कुम्भ | | | मीन | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | अश्विनी | भरणी | कृ.१ | कृ.३ | रोहिणी | मृ.२ | मृ.२ | आर्द्रा | पुन.३ | पुन.१ | तिष्य | अश्लेषा | मघा | पूफ. | उफ.१ | उफ.३ | हस्त | चित्रा २ | चित्रा २ | स्वाति | विशा.३ | विशा.१ | अनुराधा | ज्येष्ठा | मूल | पूषा.॥ | पूषा.३॥ | उषा.१ | उषा.३ | श्रव.१॥ | श्रव.२॥ | धनि.२ | धनि.२ | शत. | पूभा.३ | पूभा.१ | उभा. | रेवती |
| मेष | अश्विनी | २८ | ३३ | २८॥ | १८॥ | २३॥ | २२॥ | २६ | १७ | १९ | २४॥ | ३२॥ | २९ | २३ | २७ | १७॥ | १०॥ | १०॥ | १३ | २२॥ | २८ | २२॥ | १९॥ | २६॥ | १५ | १३ | २५ | २६ | २३॥ | २६ | २७ | २६ | २१ | २० | १५ | १६ | १५॥ | २५॥ | २७ |
| | भरणी | ३४ | २८ | २९ | १९ | २३॥ | १५॥ | १९ | २६ | २६॥ | ३२॥ | २४॥ | २६॥ | २२ | २० | २६ | २१॥ | २० | ४ | १४ | २९॥ | २२ | १९॥ | १७॥ | १९॥ | २० | १८ | १९ | २७ | २८॥ | २७ | २६ | ११ | १० | २० | २४ | २३॥ | १८॥ | २७॥ |
| | कृत्ति.१ | २७॥ | २९ | २८ | १८ | ११ | १७ | २० | २० | २७ | २६॥ | २७॥ | २४॥ | १६॥ | २० | २२ | १५॥ | १५॥ | १८ | २७॥ | १५॥ | १९॥ | १६॥ | २०॥ | २६॥ | २५ | १८ | १९ | १२॥ | १५॥ | १२॥ | ११ | २६ | २५ | २६॥ | १८॥ | १८॥ | २०॥ | १२॥ |
| वृष | कृत्ति.३ | १९॥ | २० | १९ | २८ | २१ | २७॥ | १८ | १७॥ | १८॥ | २३ | २४ | २१ | १९ | २२ | २४ | २१ | २१ | २३॥ | २२॥ | १०॥ | १४॥ | २१॥ | २५॥ | ३१॥ | २२ | १४॥ | १४॥ | ८ | १४ | ११ | १० | २४॥ | २९॥ | ३१॥ | २३॥ | २१ | २३ | १५ |
| | रोहिणी | २३॥ | २४ | १२ | २१ | २८ | ३६ | २७ | २३॥ | २३ | २८ | २९ | १४ | १२॥ | २६॥ | २८ | २६ | २६ | २० | १९ | १५॥ | ९॥ | १६॥ | ३०॥ | २४॥ | १४ | १९॥ | २१ | १२॥ | १७ | १९ | १७॥ | २१ | २६ | २४॥ | ३०॥ | २८ | २७ | २० |
| | मृ.२ | २३॥ | १५॥ | १९॥ | २८॥ | ३६ | २८ | १९ | २४ | २३ | २८ | २१ | २३ | २१॥ | १७॥ | २५॥ | २३॥ | २६ | १३ | १२ | २५ | १९॥ | २५॥ | २२॥ | २५॥ | १५ | १०॥ | १२ | १८ | २२॥ | २७ | २५॥ | १४ | १९ | २७ | २९॥ | २७ | १८ | २८ |
| मिथुन | मृ.२ | २७ | १९ | २२॥ | २० | २७ | २०॥ | २८ | ३३ | ३२॥ | २० | १३ | १५ | २४ | २० | २८॥ | ३१॥ | ३४ | २१ | १४ | २७ | २०॥ | १५ | १३ | १५ | २३ | १९ | १७॥ | २५ | २० | २४॥ | २६ | ११॥ | १३ | २१ | २३॥ | २५॥ | १७ | २६॥ |
| | आर्द्रा | १८॥ | २७ | २१॥ | १९ | २४ | २६॥ | ३४ | २८ | २५ | १२॥ | २०॥ | १३ | २३ | २९ | २२ | २४॥ | २४॥ | २८ | २३ | २७ | २१ | १५॥ | १९ | ५ | १६ | २८ | २७ | २८ | २३॥ | २३॥ | २४॥ | १८॥ | १९ | १२ | १८ | २० | २६॥ | २६॥ |
| | पुन.३ | २० | २६ | २३ | २०॥ | २३ | २४ | ३२॥ | २४ | २८ | १५॥ | २२॥ | १७ | २३ | २७ | २१॥ | २३॥ | २५॥ | २७ | २०॥ | २८ | २२ | १६॥ | २२॥ | ८ | १४ | २८ | २६ | २७ | २२॥ | २३॥ | २४॥ | १८ | १९॥ | १४ | १७ | १९ | २८ | २७॥ |
| कर्कट | पुन.१ | २२॥ | २९॥ | २६॥ | २३ | २७ | २७ | १९ | १०॥ | १४॥ | २८ | ३५ | २९॥ | १७॥ | २१॥ | १५॥ | १८ | १९ | २१ | २०॥ | २८ | २२ | २० | २६ | ११॥ | ८ | २२ | २२॥ | २१॥ | २६ | २७ | २७ | २२ | १३॥ | ८ | ११ | १७ | २६ | २५॥ |
| | तिष्य | ३१॥ | २२॥ | २७॥ | २४ | २७ | २० | १२ | १८॥ | २१॥ | ३५ | २८ | ३० | १८॥ | १५॥ | २४॥ | २६ | २७ | १२ | ११॥ | २६॥ | २१ | २० | १९ | २२ | १७ | १२ | १२॥ | २२ | २७ | २५ | २५ | १३ | ४॥ | १४॥ | १८ | २६ | १८ | २७ |
| | अश्लेषा | २६ | २४॥ | २३॥ | २० | १३ | २१ | १३ | १२ | १५ | २८॥ | २९ | २८ | १६ | १६॥ | १८॥ | २१ | २१ | २६ | २५॥ | १२॥ | १७॥ | १५॥ | २० | २६ | २२॥ | १६ | १७॥ | ८॥ | १३ | १३ | १३ | २७ | १८॥ | १९॥ | १२॥ | १८॥ | २१ | १३ |
| सिंह | मघा | २१ | २१ | १७॥ | १८॥ | ११॥ | १९॥ | २२ | २२ | २१ | १७॥ | १९॥ | १७ | २८ | ३० | २७॥ | १६॥ | १६॥ | २२ | २५ | ११॥ | १७ | २४॥ | २६॥ | ३४ | २५ | १९॥ | २१ | १० | ५॥ | ५॥ | ५ | १९ | २५ | २६ | १८॥ | १८॥ | १९॥ | १३ |
| | पूर्वफ. | २७ | १९ | २१ | २२ | २५॥ | १७॥ | २० | २८ | २७ | २३॥ | १७॥ | १७॥ | ३० | २८ | ३५ | २४ | २२॥ | ८ | ११ | २५॥ | १९ | २६॥ | २४॥ | २६॥ | २० | १७॥ | १९ | २५॥ | २१ | १९॥ | १८॥ | ५॥ | १०॥ | १९॥ | २४॥ | २४॥ | १७॥ | २५॥ |
| | उफ.१ | १८॥ | २७ | २२ | २३ | २७ | २५॥ | २८॥ | २१ | २१॥ | १७॥ | २६॥ | १९॥ | २६॥ | ३५ | २८ | १७॥ | १६॥ | १४ | १७ | २६ | १७ | २४॥ | ३३॥ | १९॥ | १० | २५॥ | २७ | २६॥ | २२ | २१ | २० | १२॥ | १८ | १२ | १६ | १६॥ | २७॥ | २५॥ |
| कन्या | उफ.३ | १२॥ | २२॥ | १६॥ | २१ | २६ | २४॥ | ३१॥ | २३॥ | २४॥ | २० | २८ | २२॥ | १७॥ | २५ | १८॥ | २८ | २७ | २४॥ | १६॥ | २५॥ | १६॥ | २० | २८ | १५ | १४ | २९॥ | २८ | ३०॥ | २५॥ | २५ | २६ | १६ | १६॥ | १०॥ | १४॥ | १७॥ | २८॥ | २७॥ |
| | हस्त | ११ | २१ | १७ | २२ | २५॥ | २६ | ३३ | २२॥ | २४॥ | २० | २८ | २३ | १८॥ | २२॥ | १७ | २६ | २८ | २८ | २० | २६॥ | १८॥ | २१ | २८ | १५ | १५ | २७ | २६ | २८॥ | २४ | २५ | २६ | २०॥ | २१ | १०॥ | १५॥ | १८॥ | २६॥ | २७॥ |
| | चित्रा २ | १३ | ५॥ | १९ | २३॥ | २० | १२ | १९ | २७ | २५॥ | २१॥ | १२ | २७ | २३ | ९ | १५ | २४॥ | २७ | २८ | २० | १९ | २६॥ | २९ | १३ | २७ | २८ | १४ | १४ | २२ | १७ | १९ | १९ | १७॥ | १८ | २४ | १८॥ | २१॥ | १०॥ | २०॥ |

## वैदिकतिथिपत्र

| वरको राशि / वधूको राशि | नक्षत्र | मेष | | | वृष | | | मिथुन | | | कर्कट | | | सिंह | | | कन्या | | | तुला | | | वृश्चिक | | | धनु | | | | मकर | | | | कुम्भ | | | मीन | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| वधूको राशि | नक्षत्र | अश्विनी | भरणी | कृ.१ | कृ.३ | रोहिणी | मृ.२ | मृ.२ | आर्द्रा | पुन.३ | पुन.१ | पुष्य | अश्लेषा | मघा | पूफ. | उफ.१ | उफ.३ | हस्त | चित्रा२ | चित्रा२ | स्वाति | विशा.३ | विशा.१ | अनुराधा | ज्येष्ठा | मूल | पूषा.।। | पूषा.३।। | उषा.१ | उषा.३ | श्रव.१।। | श्रव.२।। | धनि.२ | धनि.२ | शत. | पूभ.३ | पूभ.१ | उभ. | रेवती |
| तुला | चित्रा २ | २२।। | १५ | २८।। | २३।। | २० | १२ | १३ | २३ | २० | १९।। | ११।। | २६।। | २६ | १२ | १८ | २७।। | २० | २१ | २८ | २७ | ३४।। | २४।। | ८ | २२।। | २८ | १४ | १३ | २२ | २५।। | २७।। | २७ | २५।। | २० | २६ | २० | १४ | ३।। | १२।। |
| | स्वाति | २९ | ३०।। | १७ | १२।। | १५।। | २६ | २७ | २६ | २८ | २९ | २७।। | १३।। | १३।। | २५।। | २६ | २५।। | २७।। | २१ | २८ | २८ | २० | १० | २३।। | १८।। | २३ | २७ | २६ | १९ | २२ | २३।। | २४।। | २८।। | २३ | २२ | २७ | २१ | १९।। | १२।। |
| | विशा.३ | २२।। | २३ | २०।। | १५।। | ११।। | १८ | २१ | २१ | २१ | २२ | २१ | १७।। | १८ | २० | १८ | १७।। | १८।। | २७।। | ३४।। | १९ | २८ | १८ | १८ | २२।। | २८ | २२ | २१ | १४ | १७।। | १७।। | १७।। | ३२ | २६।। | २६ | २२ | १६ | १३ | ५।। |
| वृश्चिक | विशा.१ | १७।। | १८।। | १५।। | २०।। | १५।। | २३।। | १३।। | १४।। | १४।। | १९ | १९ | १५।। | २४।। | २५।। | २३।। | १८ | १९ | २८ | २३।। | ९ | १७ | २८ | २८ | ३२।। | २३।। | १७।। | १७।। | ९।। | १३ | १२ | १२ | २७ | २७ | २६।। | २२।। | २१ | १९ | ११।। |
| | अनुराधा | २५।। | १६।। | २०।। | २५।। | २८।। | २१।। | ११ | १६ | २१।। | २६ | १९ | २१ | २६।। | २२।। | ३१।। | २६ | २७ | १२ | ७।। | २२।। | १७ | २८ | २८ | ३१ | १६।। | १४।। | १५।। | २२।। | २६ | २७ | २६ | १४ | १३ | २२ | २६।। | २६ | १९ | २७ |
| | ज्येष्ठा | १३ | १८।। | २५।। | ३०।। | २३।। | २३।। | १३ | ३ | ५ | १०।। | २१ | २६ | ३३ | २५।। | १८।। | १३ | १३ | २५ | २०।। | १६।। | २०।। | ३१।। | ३० | २८ | १५ | १७।। | १८।। | १७।। | २१ | २१ | २० | २७ | २६ | १९ | १२ | ११।। | २२ | २१ |
| धनु | मूल | १३ | २० | २५।। | १९ | १३ | १३ | २१ | १५ | १२ | ८ | १७।। | २३।। | २५ | १९ | १० | १४ | १३ | २७ | २७ | २१ | २७ | २४।। | १६।। | १६ | २८ | २८ | २७ | २५।। | १५।। | १५।। | १६।। | २१ | २९।। | २१।। | १५।। | १७ | २५ | २६।। |
| | पूषा.।। | २६ | १८।। | १८ | १२।। | १८।। | १०।। | १९ | २७ | २७ | २३ | १३ | १७ | १९।। | १७।। | २५।। | २८।। | २७ | १३ | १३ | २७ | २१ | १८।। | १६।। | १८।। | २८ | २८ | २७ | ३४ | २३ | २३।। | २४।। | ८ | १६।। | २३।। | ३०।। | ३२ | २३ | ३२ |
| | पूषा.३।। | २७ | २० | १९ | १३।। | २० | १२ | १७।। | २६ | २६ | २४।। | १४।। | १८।। | २१ | १९ | २७ | २८।। | २६ | १३ | १२ | २६ | २० | १८।। | १७।। | १९।। | २७ | २७ | २८ | ३४ | २४ | २४।। | २३।। | ९।। | १५ | २२।। | २९ | ३३।। | २४।। | ३३।। |
| | उषा.१ | २४।। | २७ | १२।। | ७ | ११।। | १८ | २५ | २७ | २७ | २३।। | २४ | ९।। | १० | २५।। | २६।। | २९।। | २८।। | २१ | २१ | १९ | १३ | १०।। | २४।। | १८।। | २६।। | ३६ | ३४।। | २८ | १८ | १६।। | १८ | १५।। | २३।। | २३।। | २९।। | ३१।। | ३२ | २३।। |
| मकर | उषा.३ | २८ | २९।। | १६।। | १४ | १७ | २३।। | २० | २४।। | २२।। | २८ | २९ | १४ | ६।। | २२ | २३ | २५।। | २५ | १७।। | २४।। | २३।। | १६।। | १४ | २८ | २२ | १६ | २५।। | २७ | १७।। | २८ | २८ | २६।। | २६।। | १७।। | १७।। | २३।। | ३०।। | ३१।। | २२।। |
| | श्रव.१।। | २८ | २८ | १४।। | १२ | १८ | २७ | २३।। | २१।। | २२।। | २८ | २६ | १५ | ७।। | १९।। | २१ | २४ | २५ | २० | २७ | २२।। | १७।। | १४ | २८ | २३ | १७।। | २३।। | २४।। | १६ | २५ | २८ | २८ | ३० | २०।। | १८।। | २३ | ३०।। | २९।। | २३।। |
| | श्रव.२।। | २७ | २६।। | १३ | ११ | १६।। | २५।। | २५ | २२।। | २३।। | २८ | २६ | १५ | ७ | १८।। | २० | २५ | २६ | २० | २७ | २३।। | १७।। | १४ | २७ | २२ | १८।। | २४।। | २३।। | १६ | २४ | २७ | २८ | २९ | २२ | १९।। | २४।। | २९।। | २९।। | २२।। |
| | धनि.२ | २१ | १२ | २७ | २४।। | २१ | १३ | ९।। | १७।। | १६ | २२ | १३ | २८ | २० | ५।। | १३।। | १६ | १९।। | १७।। | २५।। | २६।। | ३० | २८ | १४ | २८ | २१ | ८ | ९।। | १६ | २६।। | २८ | २८ | २८ | १८।। | २३।। | १९ | २६।। | १५।। | २२।। |
| कुम्भ | धनि.२ | २० | ११ | २६ | ३०।। | २७ | १९ | १२ | १९ | १८।। | १३।। | ४।। | १९।। | २६ | ११।। | १९ | १७।। | २१ | १९ | २० | २२ | २६।। | २८ | १३ | २७ | ३०।। | १६।। | १५।। | २४।। | १८।। | २० | २१ | १९।। | २८ | ३३ | २८।। | १८ | ७ | १४ |
| | शत. | १५ | २१ | २८ | ३२।। | २५।। | २७ | २० | १२ | १३ | ८ | १४।। | २०।। | २७ | २१ | १३ | ११।। | ९।। | २५ | २६ | २० | २६ | २७।। | २२ | २० | २२।। | २४।। | २३ | २४।। | १८।। | १८।। | १९ | २४।। | ३३ | २८ | २९ | ८।। | १७ | १६ |
| | पूभ.३ | १७।। | २५ | २० | २४।। | ३१।। | ३१।। | २४।। | १८ | १८ | १३ | २० | १३।। | १९।। | २५।। | १७ | १५।। | १७।। | १९।। | २०।। | २८ | २२ | २३।। | २८ | १३ | १६।। | ३०।। | २९।। | ३०।। | २४।। | २४।। | २४ | २० | २७ | १९ | २८ | १७।। | २२।। | २० |
| मीन | पूभ.१ | १५।। | २२।। | १७।। | २० | २७ | २७ | २५।। | १९ | १९ | १८ | २५ | १८।। | १७।। | २४ | १५।। | १६।। | १८।। | २०।। | १३।। | २१ | १५ | २१ | २७ | ११।। | १६ | ३० | ३१।। | ३०।। | २९।। | २९।। | २९।। | २५।। | १७ | १० | १८।। | २८ | ३३ | ३०।। |
| | उभ. | २५।। | १६।। | १९।। | २२ | २६ | १८ | १७।। | २५।। | २८ | २७ | १९ | २१ | १८।। | १६।। | २६।। | २७।। | २६।। | ९।। | ३।। | १९।। | १२ | १९ | २० | २२ | २४ | २२ | २३।। | ३१ | ३०।। | २९।। | २९।। | १४।। | ६ | १६ | २१।। | ३३ | २८ | ३४ |
| | रेवती | २६ | २५।। | १२।। | १५ | १८ | २७ | २५।। | २४।। | २६।। | २५।। | २७ | १४ | १४ | २४।। | २४।। | २५।। | २६।। | २०।। | १३।। | ११।। | ५।। | १२।। | २७ | २२ | २६।। | २९ | ३०।। | २१।। | २३।। | २१।। | २२।। | २२।। | १४ | १६ | १८ | २९।। | ३४ | २८ |

[वरवधूगुणयोगादिको कुरा पनि मूल वेद-वेदाङ्गग्रन्थमा छैन। त्यो शक-कुषाण-आक्रामकहरुसित भारतवर्षमा आएका पश्चिमा इरानि पारसि मगज्योतिषिहरुले भारतवर्षमा ल्याएको कुरा देखिन्छ। तसर्थ वैदिकहरुले तेसको विचार नगरे पनि हुन्छ। लोकमा तेसको खोजि गरिने हुँदा लोकको खाँचो टार्न यो चक्र याँहाँ सङ्गृहीत गरिएको हो।]

## (२४) समयशुद्धिः

वैदिक-सिद्धान्त-अनुसार **तपोमास**देखि (आर्तव माघ महिनादेखि) **शुचिमास**सम्म (आर्तव आषाढ महिनासम्म) अर्थात् **२०७३।८।१५देखि २०७४।३।९सम्म उदगयन (उत्तरायण)** पर्छ। तेसमध्ये ६ ओटा **शुक्लपक्ष**का **दिनहरु** (सबै गरेर **९० दिन**) वैदिक दैव कर्मका निम्ति **शुद्ध समय** मानिञ्छ। [आगामि वर्ष ५०८३औं कलिसंवत्मा **२०७४।९।३ देखि २०७५।२।३० सम्म** उदगयन (उत्तरायण) पर्छ। तपः, तपस्य, मधु, माधव, शुक्र र शुचि मासका ६ ओटा शुक्लपक्षका दिनहरुमा वैदिक दैव कर्मका निम्ति **शुद्ध समय** हुञ्छ।]

वेदाङ्गज्योतिषका सिद्धान्त अनुसार र नेपालमा लिच्छविकाल-मल्लकालमा चलेका पद्धतिअनुसार **एस वर्ष उत्तरायणका अन्तमा ग्रीष्म ऋतुमा (२०७४।२।१२ देखि २०७४।३।९ सम्म) वैदिक अधिकमास द्वितीयशुचिमास (द्वितीय आषाढमास)** परेको छ। *[द्रष्टव्य– अर्वाचीन ज्योतिषका पुस्तकका परिभाषा र गणना अनुसार आगामी वर्ष वि.सं. २०७५ जेठ २ गते देखि ३० गते सम्म पर्ने भनिएको **अधिक ज्येष्ठमास** (मलमास) वैदिक गणनाअनुसार **शुद्ध शुचिमास** (शुद्ध वैदिक आर्तव आषाढमास) हुञ्छ, अधिकमास हुँदैन।]*

## (२५) गुरुको र शुक्रको उदयास्त

गुरुको (बृहस्पतिको) अथवा शुक्रको उदय हुँदा मात्र यो कर्म गर्नु, गुरुको (बृहस्पतिको) अथवा शुक्रको अस्त भएका अवस्थामा यो कर्म नगर्नु भन्ने विधि-निषेध वेदमन्त्रसंहिता, ब्राह्मणग्रन्थ, श्रौतसूत्र, गृह्यसूत्र, धर्मसूत्र इत्यादि मूल वेद-वेदाङ्गग्रन्थमा नभएकाले **यज्ञकालार्थसिद्धि**का निम्ति (**यज्ञकालार्थसिद्धये**—वे.ज्यो.,२श्लो.) लगधमुनिबाट प्रोक्त वेदाङ्गज्योतिष-ग्रन्थमा बृहस्पतिको र शुक्रको उदयास्तका विषयमा प्रतिपादन गरिएको छैन। गुरु-शुक्रको उदय-अस्तको विचार अरु मूल वेद-वेदाङ्गग्रन्थमा पनि नभएकाले वैदिकहरुले तेसको विचार नगरे पनि हुञ्छ। इच्छा लागे गुरु-शुक्रको उदय-अस्तको पनि विचार राखेर शुभ कर्म गरे पनि हुञ्छ।

एस वर्ष कलिसंवत् **५०८२ (परिवत्सर)**मा **गुरुको (बृहस्पतिको)** र **शुक्रको** उदय हुने र अस्त हुने कुराको विवरण एस प्रकार छ—

| | | |
|---|---|---|
| **ऊर्जकृष्णसप्तमी** | **(२०७४।६।२५ [बुधवार])** | **गुरु पश्चिमतिर अस्त** |
| **सहःकृष्णतृतीया** | **(२०७४।७।२० [सोमवार])** | **गुरुको पूर्वतिर उदय** |

| | | |
|---|---|---|
| **माधवकृष्णनवमी** | **(२०७३।१२।९ [बुधवार])** | **शुक्र पश्चिमतिर अस्त** |
| **माधवकृष्णत्रयोदशी** | **(२०७३।१२।१३ [आइतवार])** | **शुक्रको पूर्वतिर उदय** |
| **सहस्यकृष्णचतुर्दशी** | **(२०७४।९।१ [शनिवार])** | **शुक्र पूर्वतिर अस्त** |

[आगामि वर्ष कलिसंवत् ५०८३ (इदावत्सर) मा **गुरु**को (बृहस्पतिको) **२०७५।७।२६ मा** पश्चिमतिर **अस्त** र **२०७५।८।२१ मा** पूर्वतिर **उदय** तथा **शुक्र**को **२०७४।१०।१९ मा** पश्चिमतिर **उदय २०७५।७।१ मा** पश्चिमतिर **अस्त** र **२०७५।७।१५ मा** पूर्वतिर **उदय** हुने छ।]

## (२६) ग्रहण

ग्रहणको उल्लेख वेदमा (शै.शा.ऋग्वेदसंहिता ५।४०।५–९, मा.वा.शतपथब्रा. ५।३।२।२ इत्यादि) पनि पाँइञ्छ। किन्तु ग्रहणका समयमा स्नान-दानादि धार्मिककृत्य गर्न पर्ने विधाान

भने वेदमन्त्रसंहिता-ब्राह्मणग्रन्थ-श्रौतसूत्र-गृह्यसूत्र-धर्मसूत्रहरुमा छैन। महाभारतमा अपशकुनका रूपमा ग्रहणका उल्लेख पाँइञ्छन् (सभापर्व ८०।२९; वनपर्व २००।२५; भीष्मपर्व २।२३, ३।२८,३२-३३; मौसलपर्व २।१९)। लघुस्मृति-पुराणहरुमा ग्रहणका विषयका वचनहरु पाँइञ्छन्। ग्रहणलाइ सूतकजस्तो मानिएकाले अरु काम्यफलको चाहाना नगर्नेले स्पर्शकालको र मध्यकालको स्नान नगरेपनि शुद्धिका लागि मोक्षकालको स्नान गर्न पर्ने कुरा बताइएको देखिञ्छ। याज्ञवल्क्यस्मृतिमा (१।२१८) ग्रहणलाइ श्राद्धकालका रूपमा लिइएको छ। मनुस्मृतिमा (४।११०) राहुसूतकमा वेदको ग्रहण-ग्राहणार्थक अध्ययनाध्यापन तिन दिन छोड्न पर्छ भनिएको छ। ग्रहणका वेला भोजनादि नगर्ने प्रचलन छ।

कलिसंवत् ५०८२ मा (परिवत्सरमा) **नभस्यमासको पूर्णिमामा (२०७४ साउन २३ गते सोमवार राति)** देखिने खण्डग्रास चन्द्रग्रहणको विवरण—

**स्पर्श २३:०७ (राति ११:०७) बजे**
**मध्य २४:०७ (राति १२:०७) बजे**
**अन्त्य २५:०३ (राति १:०३) बजे**

[आगामी वर्ष कलिसंवत् ५०८३ मा (इदावत्सरमा) तपस्यमासको पूर्णिमामा **(२०७४ माघ १७ गते बुधवार साँज)** देखिने खग्रास चन्द्रग्रहणको विवरण—

**स्पर्श १७:३३ (५:३३) बजे**
**मध्य १९:१५ (७:१५) बजे**
**अन्त्य २०:५६ (८:५६) बजे**]



**चन्द्रग्रहण**

## (२७) वैदिकानां नक्षत्रनामकरणरीतिः

नाम राख्ने कार्यलाइ नामकरण (न्वारन/नरन) भन्दछन्। बालक जन्मेका दश दिनमा सुत्केरिलाइ शय्याबाट (ओच्छ्यानबाट) उठाएर स्नान गराइ ब्राह्मणभोजन गराएर पिताले (बाबुले) जातकको नाम राख्ने विधान गृह्यसूत्रमा पाँइञ्छ— **"दशम्यामुत्थाप्य ब्राह्मणान् भोजयित्वा पिता नाम करोति द्व्यक्षरं चतुरक्षरं वा घोषवदाद्यन्तरन्तस्थं दीर्घाभिनिष्ठानं कृतं कुर्यान् न तद्धितमयुजाक्षरमाकारान्तं स्त्रियै तद्धितम् , शर्म ब्राह्मणस्य, वर्म क्षत्रियस्य, गुप्तेति वैश्यस्य"** —(पारस्करगृह्यसूत्र१।१७।१–४)। याज्ञवल्क्यस्मृतिमा चाइँ एघारौँ दिनमा नामकरण गर्न पर्ने बताइएको छ। नेपालमा पनि एघारौँ दिनमा नामकरण (न्वारन) गर्ने चलन छ। माध्यन्दिनीयवाजसनेयि-शुक्लयजुर्वेदशाखाध्यायिहरुले पारस्करगृह्यसूत्रको अनुसरण गर्न पर्छ।

नाम राम्रो र शुद्ध संस्कृत भाषाको हुन पर्ने कुरामा शास्त्रले जोड दिएको छ। आजभोलि कतिपय वैदिक सनातनी हिन्दुहरुले विदेशि भाषाका नाम पनि राख्न थालेको देखिञ्छ। यो अत्यन्तै शोचनीय विषय हो। तेसैले हिन्दुहरुले संस्कृतभाषाको नाम राखेर आँफ्नो मौलिक शास्त्रीय परम्परा जोगाउन आवश्यक देखिञ्छ।

**नक्षत्रनाम**—नक्षत्रअनुसारको नाम राख्ने वैदिक पद्धति वेदाङ्गज्योतिषमा पाँइञ्छ। यो पद्धति पछिसम्म पनि चल्दै गरेको देखिञ्छ। निर्णयसिन्धुमा एस पद्धतिको उल्लेख नभएपनि १८४७ वैक्रमाब्दमा रचिएको धर्मसिन्धुमा चाइँ छ।१७५६ वैक्रमाब्दमा ॠषिभट्टले रचेको संस्कारभास्करमा पनि यो विषय उल्लिखित छ (१२२-१२४ पत्र)। एस पद्धतिका विषयमा वेदाङ्गज्योतिषको कौण्डिन्न्यायनव्याख्यानका भूमिकामा विस्तृत प्रतिपादन गरिएको छ। एस पद्धतिमा नक्षत्रका देवताका आधारमा नाम राखिञ्छ। पछि गएर त्यो पद्धति ओजेलमा पर्न गएको देखिञ्छ। वैदिक परम्परामा नक्षत्रअनुसारको नाम 'चुचेचोला अश्विनी' इत्यादिअनुसार राखिँदैन, नक्षत्रका देवताअनुसार राखिञ्छ; जस्तै कृत्तिका नक्षत्रमा

